● वर्ष ११ ● अङ्क ६ ● माघ २०६६ ● पूर्णाङ्क १२६

## सम्पर्क कार्यालयहरु

- **चितवन**, भ.न.पा- २, क्षेत्रपुर फोन: ०५६-५२१३८५
- **गोरखा**, सौरपानी–३ पोखरी, फोन: ९७४६०१८८७८, ९७४११२७७४५
- **कास्की**, पो.उ.म.न.पा.-१०, रामघाट, फोन: ०६१-५३०७८६
- **सर्लाही**, बरहथवा-७, एस्माली टोल, फोन: ०४६-५४००११
- **पाल्पा**, तानसेन, फोन: ९८४७०-२८१८८
- **ललितपुर**, लगनखेल, फोन:२२२००२१
- **गोरखा**, बसपार्क, फोन: ०६४-४२०३४८
- **तनहुँ**, दमौली, व्यास गुफा, फोन: ०६५-५६१६६२
- **लमजुङ**, बेंसीशहर, भीमसेनटोल
- **भक्तपुर**, कटुन्जे-१, फोन: ०१-६२१३४५५
- **काभ्रे**, बनेपा, न.पा. कार्यालय पछाडि फोन: ०१-६२२५१७२
- **कास्की**, लेखनाथ चोक, फोन: ०६१-२२९१९०
- **सिन्धुली**, रातमाटा फोन: ९८४४०४०८९९
- **स्याङ्जा**, स्याङ्जाबजार फोन: ९८४६०-४४३५४
- **चितवन**, गौरीगञ्ज
- **सिन्धुपाल्चोक**, बाह्रबिसे फोन: ०१-६९१६५९३
- **कास्की**, अर्चलबोट, विन्ध्यवासिनी
- **काठमाडौं**, पुरानोबानेश्वर, फोन: ०१-२१०११२६
- **काठमाडौं**, सिमलटार
- **काठमाडौं**, तीनकुने (मुनि भैरव)
- **ललितपुर**, गोदावरी

पत्रिका व्यवस्थापन समितिद्वारा सम्पादित एवं
***सिद्धाश्रम शक्ति केन्द्रद्वारा* प्रकाशित**

भगवान् शिव विशेष

मूल्य रु. ३०/-, वार्षिक रु. ३५०/-

आफ्नै कुरा ३
श्रीशिवतत्त्व ६
शिवरात्रि-रहस्य ११
तान्त्रोक्त शिव यन्त्र १४
महाशिवरात्रि पूजन १५
तब शिवजी प्रत्यक्ष हुनुभयो १७
सरस्वती सूक्तम् १९
पर्दा हटाएर त हेर २०
मानेश्वर महादेव २२
गुरु गीता २४
सदाशिवका अनेक स्वरुप २५
श्रीशिव गोरक्ष : नाथंप्रदाय २९
परमपूज्य सद्‌गुरुदेवको अवतरण यात्रा ३३
क्रियायोगको पूर्णता र सिद्धाश्रम प्राप्ति ३४
ॐकार ध्यान विधि ३७
आफ्नो हात आफैं हेरौं ३९
माघ महिनाको सूक्ष्म काल विवरण ४१
योग मुद्रासन ४५
आयुर्वेद ४७
गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रम गतिविधि ४८
सम्पर्क कार्यालय बाह्रबिसे, सिन्धुपाल्चोक ४९
जाँदा जाँदै ५२

# जानकारी

सिद्धाश्रम शक्ति केन्द्र प्रचलित नेपाल कानूनअनुसार विधिवत् रूपमा दर्ता भएको एक अनुसन्धानमूलक आध्यात्मिक संस्था हो र यसको केन्द्रीय कार्यालय हाल बसुन्धरा, काठमाडौँमा रहेको छ । परमपूज्य सद्‌गुरुदेवद्वय परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज एवं नेपालीहरूका गर्वका प्रतिमूर्ति महायोगी श्री शिव गोरक्षको अनुकम्पा, कृपा एवं आशीर्वादको फलस्वरूप यस केन्द्रको जन्म भएको हो । आफ्नो छुट्टै पहिचान, स्वतन्त्र अस्तित्व एवं आफ्नै किसिमको स्वाभिमान बोकेको यो संस्था देश विदेशमा रहेका अन्य कुनै संघ, संस्था वा आश्रमको शाखा, उपशाखा वा सम्पर्क कार्यालय नभएको व्यहोरा सम्बन्धित सबैका लागि जानकारी गराइएको छ । यो केन्द्र महान् गुरुहरूको स्पष्ट सूक्ष्म मार्गनिर्देशनमा आध्यात्मिक युग पुनर्निर्माणको लक्ष्यमा गतिशील छ । यहाँ संचालन भइरहेका सम्पूर्ण कार्यक्रम तथा गतिविधिहरू यसै केन्द्रमार्फत सोझै निर्देशित छन् । यहाँबाट उपलब्ध हुने सम्पूर्ण सामग्रीहरूको प्राण-प्रतिष्ठा विशेषरूपमा यही आश्रमबाट गरिएको हुन्छ । त्यसैले एक स्वतन्त्र र आफैमा सक्षम यस संस्थालाई अन्य कुनै संघ, संस्था वा आश्रमसँग तुलना गर्न खोज्नु, त्यस्तै प्रकारका कुराहरू यहाँबाट लागू गराउन, प्राप्त गर्न खोज्नु यस संस्थाको अवहेलना गरे सरह हुनेछ जे जति कार्यक्रमहरू यहाँ संचालन भइरहेका छन् र आगामी दिनहरूमा पनि संचालन हुँदै जानेछन्, ती सबै परमपूज्य सद्‌गुरुदेवहरूकै इच्छा एवं निर्देशनअनुसार सम्पन्न हुनेछन् । त्यसैले अनावश्यक तर्क-वितर्क, शङ्का-उपशङ्का गरी, भ्रम फैलाउँदै यस संस्थाको छविमाथि अनावश्यक टीका-टिप्पणी गर्नु सत्यता र वास्तविकतामाथि नै प्रश्नचिह्न लगाउनु हो । प्रत्येक व्यक्तिका लागि आवश्यक पर्ने सम्पूर्ण प्रकारका मार्गनिर्देशन प्रदान गरी भौतिक समस्याहरूको समाधान गर्दै आध्यात्मिक उच्चता प्रदान गर्न, पूर्णतामा लैजान यो केन्द्र सक्षम छ । विश्वास अविश्वासभन्दा माथि, साधारण व्यक्तिको सीमित सोचाइ, विचार र कल्पनाभन्दा परको यस अद्वितीय आश्रममा आबद्ध भई आफ्नो जीवनलाई उत्कर्षमा पुऱ्याउन सक्नु नै हाम्रो अहोभाग्य हुनेछ । यस्ता प्रकारका अनावश्यक भ्रमबाट सतर्क हुँदै पूर्णरूपमा स्पष्ट भएर मात्र अघि बढ्न हुन सम्पूर्ण महानुभावहरूमा सिद्धाश्रम शक्ति केन्द्र हार्दिक अनुरोध गर्दछ । साथै केन्द्रको आफ्नै प्रकारको नीति, नियम र अनुशासन भएकोले यसलाई पालना गर्न नसक्ने व्यक्तिहरूका लागि यस केन्द्रमा कुनै स्थान रहने छैन र यससम्बन्धी कुनै किसिमको सुनुवाइ पनि नहुने व्यहोरा अवगत गराइएको छ । साथै, आध्यात्मिक शक्ति अनुसन्धानमूलक यस मासिक पत्रिकामा प्रकाशित लेख, रचना, चित्रादिमा संस्थाको सहमति हुन आवश्यक नरहेको व्यहोरा अवगत गराइन्छ ।

## परामर्श सेवासम्बन्धी सूचना

सिद्धाश्रम शक्ति केन्द्रमा परामर्श सेवासम्बन्धी प्राप्त सुविधा निम्नानुसार रहेको जानकारी गराइन्छ ।

| स्थान | समय | बार |
|---|---|---|
| बसुन्धरा | साँझ ४:३० बजेपछि | सोमवार र मङ्गलवार |
| ललितपुर | दिउँसो ४:०० बजेपछि | मंगलवार र बिहीवार |
| भक्तपुर | दिउँसो ४:०० बजेपछि | शनिवार र बुधवार |
| बनेपा | दिउँसो ४:०० बजेपछि | प्रत्येक आइतवार |

# आश्रमका नियमित कार्यक्रमहरू

- आश्रम खुल्ने समय : प्रत्येक दिन बिहान १०:०० बजेदेखि साँझ ६:०० बजेसम्म ।
- गोरक्ष निखिल पुस्तकालय खुल्ने समय : प्रत्येक दिन १०:०० बजेदेखि साँझ ५:०० बजेसम्म ।
- परामर्श सेवासम्बन्धी भेटघाट : अपराह्न ३:०० बजेपछि ।
- आरती : प्रत्येक साँझ ५:०० बजे ।
- गुरु पूजन : प्रत्येक बृहस्पतिवार बिहान १०:०० बजेदेखि ।
- विशेष गुरु पूजन : प्रत्येक अंग्रेजी महिनाको २१ तारीख, बिहान १०:०० बजेदेखि ।
- आध्यात्मिक शक्ति अनुसन्धानमूलक नेपालको एक मात्र मासिक पत्रिका 'गोरक्ष निखिल वाणी'को नियमित प्रकाशन ।
- विभिन्न चाड-पर्व एवं अवसरहरूमा विशेष कार्यक्रम ।
- विशेष हवन: प्रत्येक महिनाको पहिलो सोमवार श्री शिव गोरक्ष हवन, पहिलो मङ्गलवार तान्त्रोक्त वटुक भैरव हवन, पहिलो बुधवार तान्त्रोक्त महालक्ष्मी हवन र पहिलो बिहीवार तान्त्रोक्त बगलामुखी हवन कार्यक्रम संचालन ।

**आवरण तथा भित्री कम्प्युटर सेटिङ्ग**
सिद्धाश्रम शक्ति केन्द्र, कम्प्युटर उपविभाग

**मुद्रण**
**भेराइटी प्रिन्टर्स प्रा.लि.**
कुलेश्वर, काठमाडौं ।

**पत्रिकाको कार्यालय**
**बसुन्धरा, काठमाडौं, नेपाल**
**फोन नं: २०७१२००, पत्रिका वितरण फोन नं: ०१-६२२५१७७** (CDMA Phone), URL: www.gnv.org.np, Email: info@gnv.org.np

# आफ्नै कुरा

अध्यात्मलाई व्यक्तिहरूले आ–आफ्नै धारणाले हेर्दछन्। कसैको दृष्टिमा अध्यात्म नै सर्वस्व हो, जीव, जगत्, सृष्टि सबै अध्यात्मभित्रबाट सिर्जिएका हुन्, सारा संसार अध्यात्मको विशालताभित्र समेटिएको छ, जीवको सृष्टि, स्थिति, संहार, अध्यात्मभित्रको गूढ रहस्य हो भने कसैले अध्यात्मलाई एउटा सामान्य पाटो भन्ठालान्। अध्यात्म त बूढाबूढी अथवा केही गर्न नसक्नेहरूको आश्रयको माध्यम मात्रै ठान्न सक्छन्। धर्म र धार्मिकताभित्रको अंशरूपमा अध्यात्मलाई लिन सक्छन्। संकुचित दायरामा राखी यसको व्याख्या र परिभाषा दिन सक्छन्। यी सबै व्यक्तिभित्रका आ–आफ्ना दायराभित्रका सोच हुन् भन्दा फरक नपर्ला। तर जो जसले जे जसरी आफ्नो सोच बनाए पनि वास्तविक सत्य के हो भने अध्यात्म सारा जगत्को गूढ रहस्यभित्र छिपेको यथार्थ सत्य हो। यसैभित्र नै सारा संसार अडेको छ। यसैभित्र हाम्रो जीवनको वास्तविकता लुकेको छ। त्यसैले अध्यात्मको महासागरभित्र प्रवेश गरेर मात्रै जीवनको वास्तविकता बुझ्न सकिन्छ। त्यसैले यसको खोज, अनुसन्धानमा लागौं र वास्तविक सत्य बुझ्ने कोशिश गरौं।

यसपालिको यस अंकलाई 'भगवान् शिव विशेष'को रूपमा निकालेका छौं। हिन्दु धर्म, संस्कृतिमा भगवान् शिवलाई आराध्यदेवको रूपमा मानिएको छ। सबैभन्दा ठूला देवता, जसले जीवलाई मोक्ष दिन सक्छन्, जीवलाई भवसागरबाट पार लगाउन सक्छन् भनी भगवान् शिवलाई सर्वोच्च देवको रूपमा पूजित गरिने, आराधना, साधना, उपासना आदि गर्ने गरिन्छ।

भगवान् शिवको महिमा, गरिमा, उच्चता शब्द चर्चाभन्दा धेरै माथि छ। उहाँको विराटतालाई शब्दमा उतार्न सकिँदैन। भगवान् शिवको देशको रूपमा चिनिने हिमालयको काखमा अवस्थित नेपालको आफ्नै गरिमामय स्थान रहँदै आएको छ। आराध्यदेव पशुपतिनाथको दिव्य प्रकटस्थल, बाह्र ज्योतिर्लिङ्गको प्रमुख शिर नै नेपालमा हुनु, साथै दिव्यतम् शिव मन्दिरहरू नेपालमा हुनुले पनि नेपालको आफ्नै गरिमामय स्थान रहँदै आएको छ। यस्तो दिव्यतम् पुण्यभूमि नेपाल भएर पनि शक्तिपीठहरूको उचित संरक्षण, सम्वर्द्धन नहुनु, प्रचारप्रसार नहुनु आफैमा दुःखदायी पक्ष हो भन्दा फरक नपर्ला।

भगवान् शिवको दिव्यता, उच्चता, महानतालाई शब्दले, कुनै व्याख्याले होइन, जप, तप, साधना, शिवभक्तिले मात्र बुझ्न सकिन्छ। त्यसैले तपस्यामा लागौं, भगवान् शिवको दिव्य कृपा, आशीर्वाद प्राप्त गर्दै अगाडि बढौं।

अन्तमा, यस अंकको प्रकाशनमा भए गरेका गल्ती, कमी–कमजोरीका लागि यहाँहरूसमक्ष र परमपूज्य  सद्गुरूदेवहरूसमक्ष पनि क्षमा माग्दै आवश्यक सल्लाह, सुझावको अपेक्षा राख्दछौं।

अस्तु।

परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज

परमपूज्य सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ

**मानव जीवनमा गुरुको सर्वथा उच्च स्थान मानिन्छ। गुरु प्राप्तिबिना मानव जीवन व्यर्थ छ। सम्पूर्ण शास्त्रको सम्यक् ज्ञान भए पनि, धन सम्पत्ति र रूप लावण्यले भरिपूर्ण भए पनि, समस्त प्रकारका सिद्धि, शक्ति र ऐश्वर्यले भरिपूर्ण भए पनि यदि गुरु प्राप्त भएको छैन भने मानिस अपूर्ण नै हुन्छ किनकि गुरुले नै संसार सागरबाट तारेर हामीलाई मोक्षको भागीदार बनाउनुहुन्छ, हामीलाई असीम आनन्दबाट तृप्त गरेर पूर्ण गरिदिनुहुन्छ। यसप्रकार पूर्णता, मुक्ति अनि अनगिन्ती सिद्धि र शक्ति प्रदान गर्नुहुने दुई सद्गुरुदेवहरूलाई सिद्धाश्रम शक्ति केन्द्रले धारण गरिरहेको छ। गुरुहरूको महिमा, गरिमा र परिचय कसले पो दिन सक्छ र ? तैपनि सामान्य जानकारीसम्मका लागि महान् गुरुहरूको संक्षिप्त परिचय दिएका छौँ–**

### परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज

*वन्दे नारायणं देवं सद्गुरुं निखिलेश्वरं।*
*ज्ञानामृतरसेनैव पूतं येनाखिलं जगत् ॥*

यस विश्व ब्रह्माण्डलाई भौतिक एवं आध्यात्मिकरूपले सन्तुलित राख्न प्रकृतिद्वारा निर्मित अद्वितीय तपस्थली नै सिद्धाश्रम हो । मानव जीवनको अन्तिम ध्येय यस सिद्धाश्रमका प्राणाधार परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज हुनुहुन्छ। आफ्ना गुरु स्वामी सच्चिदानन्दज्यूको आदेश शिरोपर गरी 'धर्मसंस्थापनार्थाय...'को शंखघोष गर्दै उहाँ सन् १९३३ अप्रिल २१ तारीखमा भारतस्थित राजस्थान प्रान्तको जोधपुरमा अवतरित हुनुभयो । वेदाध्ययनबाट शिक्षा शुरु गर्नुभएका उहाँको विवाह बाह्र वर्षको उमेरमा भगवती देवीसँग भयो। आफ्नो जीवन परिवारको लागि मात्र नभएर सम्पूर्ण समाजको लागि हो भन्दै विवाहपश्चात् उहाँले थुप्रै वर्ष हिमालयका गुफा, विकट कन्दरा र जंगलहरूमा संन्यास जीवन बिताउनुभयो। त्यसबेला उहाँले विभिन्न स्वामी, संन्यासी, योगी, तान्त्रिक, मान्त्रिक, आयुर्वेदाचार्यहरूसँग भेटेर विभिन्न विधामा आफूलाई निष्णात् बनाउनुभएको थियो । संन्यास जीवनपश्चात् पुनः गृहस्थमा फर्केर आफूले प्राप्त गरेको आध्यात्मिक ज्ञानलाई समाजमा फैलाउने कार्य गर्नुभयो। यसको लागि सयौं पुस्तकहरूको रचना गर्दै असंख्य शिविर सञ्चालन गरी साधना, प्रवचन र दीक्षाको माध्यमबाट शिष्य निर्माण प्रक्रियालाई जोड दिनुभयो। यसरी ज्योतिष, सामुद्रिक शास्त्रका सुविज्ञ ज्ञाता, तन्त्र-मन्त्रका अन्तिम नाम, आधुनिक धन्वन्तरि, सम्मोहन विज्ञानका मसीहा, कुण्डलिनी शक्तिका सहज व्याख्याकार, सूर्य विज्ञानका अपूर्व ज्ञानी, धुरन्धर रत्न चिकित्सक आदिका रूपमा उहाँ डा. नारायणदत्त श्रीमालीको नामबाट विश्वमा विख्यात् हुँदै महामहोपाध्याय, मन्त्र शिरोमणि, समाज शिरोमणि, जगद्गुरु आदिको संज्ञाले विभूषित हुनुभयो। आगामी गोरक्ष निखिल युग निर्माणको महायोजना आफ्ना शिष्यहरूको काँधमा सुम्पेर सन् १९९८ जुलाई ३ मा महाप्रयाण लिई उहाँ आफ्नो मूल स्थान सिद्धाश्रम फर्कनुभयो। हाल सद्गुरुदेवकै सूक्ष्म आदेश निर्देशनबमोजिम सिद्धाश्रम शक्ति केन्द्र यस महान् योजनामा कटिबद्ध छ।

### श्री श्री महायोगी गुरु गोरखनाथ

*अनन्त कोटि ब्रह्माण्ड गोरक्ष स चराचम् ।*
*दर्शनम् मुक्ति लाभं च तस्मै श्री गोरक्ष नमः ॥*

श्री श्री महायोगी गुरु गोरखनाथ सम्पूर्ण गुरुहरूमा महागुरु, सम्पूर्ण योगीहरूमा महायोगी, सम्पूर्ण नाथहरूमा महानाथ हुनुहुन्छ। महायोगी श्री श्री गुरु गोरखनाथ भगवान् शिवका सबैभन्दा महत्त्वपूर्ण र प्रमुख अवतारको रूपमा पूजित हुनुहुन्छ । योग मार्गको प्रचारको लागि भगवान् शिवले नै गोरक्ष रूप धारण गर्नुभएको हो । यसैले उहाँलाई श्री शिव गोरक्षको रूपमा आदर-सम्मान गर्ने गरिन्छ । गो शब्दको अर्थभित्र समाहित गाई, पृथ्वी, इन्द्रिय, आदि सम्पूर्णको रक्षा गर्ने गोरक्ष नै हुनुहुन्छ। श्रीमद्भागवत, नारदपुराण, स्कन्दपुराण, ब्रह्माण्डपुराण, शिवपुराण, शाक्तप्रमोद, गोरक्षगीता आदिमा उहाँको बारेमा उल्लेख भएको छ। विश्वको इतिहासलाई हेर्दा उहाँको प्राकट्य सयौं हजारौं वर्षको अन्तरालमा विभिन्न स्थानमा भएको पाइन्छ। यसबारे विभिन्न विद्वान्हरूले थुप्रै अनुसन्धान गरेका छन्। आमाको कोखबाट नभई आवश्यकता अनुसार आफै प्रकट हुनुहुने महायोगी अजर अमर कायायुक्त हुनुभएको कुरा स्पष्ट हुन्छ ।

नेपालको सन्दर्भमा हेर्दा गोरखा राज्यको नामाकरण उहाँको नामबाट भएको पाइन्छ भने उहाँकै आशीर्वादबाट यो राष्ट्र कहिल्यै पराधीन बन्नु नपरेको गौरवशाली इतिहास रहेको छ। उहाँको ऋण चुकाउन पनि हामीले उहाँको भक्ति गर्नैपर्दछ। नाथपंथका अग्रज महानाथ गुरु गोरखनाथ नेपालका राष्ट्रगुरु हुनुहुन्छ। नेपालमा विभिन्न ठाउँमा उहाँका मठ-मन्दिरहरू छन् जस्तै गोरखाको गोरख गुफा, पशुपतिको मृगस्थली पीठ, हनुमानढोकाको काष्ठमण्डप आदि । सिद्धाश्रम शक्ति केन्द्रको अनुसन्धानअनुसार गुरु गोरखनाथ सर्वप्रथम यस धरतीमा वैशाख शुक्ल पूर्णिमाको दिन गोरखाको गोरख गुफामा प्रकट हुनुभएको थियो । नेपालमा मात्र नभएर विश्वभर उहाँको सम्प्रदाय, मन्दिर एवं मठहरू स्थापित छन्। आगामी गोरक्ष निखिल युग निर्माणको लागि गोरक्ष शक्ति जगाउँदै नाथ परम्परालाई समाजमा स्थापित गर्न सिद्धाश्रम शक्ति केन्द्र गतिशील छ ।

## (आध्यात्मिक शक्ति अनुसन्धान संस्था)

सिद्धाश्रम शक्ति केन्द्र, आध्यात्मिक शक्ति अनुसन्धान संस्थाको स्थापना ०५६ वैशाख ८ गते भए पनि यसको विधिवत् दर्ता भने ०५६ वैशाख २३ गते मात्र भयो । परमपूज्य सद्गुरुदेवहरू श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजलाई गुरुरूपमा धारण गर्दै यो संस्था शुरुमा केही वर्ष काठमाडौँको कमलादीबाट सञ्चालन भयो । त्यसपछि बत्तीसपुतली, पुरानो बानेश्वर हुँदै संचालन भएको यस संस्थाको केन्द्रीय कार्यालय हाल बसुन्धरामा रहेको छ ।

समस्त भूमण्डललाई गोरक्ष निखिल ऊर्जाले आपूरित गर्दै गोरक्ष निखिल युग स्थापनार्थ अघि बढिरहेको यस संस्थाले विभिन्न आध्यात्मिक गतिविधिहरूलाई अघि बढाइरहेको छ । मुलुकभर विभिन्न सम्पर्क कार्यालयहरूमार्फत आफ्ना गतिविधिहरू अघि बढाइरहेको यस संस्थाले विभिन्न ठाउँमा स-साना एकाइहरूको गठन गरेर पनि समाजमा आध्यात्मिक गतिविधिलाई अघि बढाइरहेको छ । संस्थाका विभिन्न सम्पर्क कार्यालयहरूमा बिहीबारको गुरु पूजन, दिव्य गुरु महोत्सव, विभिन्न चाडपर्वमा पूजनादि कार्यक्रमहरू सम्पन्न भइरहेका छन् भने विदेशमा रहेका यससँग सम्बन्धित एकाइहरूले पनि आध्यात्मिक गतिविधिमार्फत विश्वमा आध्यात्मिक शीतलता छरिरहेका छन् ।

संस्थाले प्रत्येक महिना काठमाडौं उपत्यकालगायत अन्य स्थानहरूमा रहेका विभिन्न शक्तिपीठ र मन्दिरहरूमा तान्त्रोक्त हवनहरू सञ्चालन गर्दै आइरहेको छ भने प्रत्येक वर्ष यस संस्थाले गोरखास्थित गोरख गुफामा श्री श्री महायोगी गुरु गोरखनाथको चरणकमलमा सवालाख रोट चढाउँदै आइरहेको छ । यसका अतिरिक्त कैयौं मन्त्र हवन साधना, तान्त्रोक्त साधना, ध्यान, महोत्सव आदिका कार्यक्रमहरू सञ्चालन गरिसकेको छ भने गोरक्ष निखिल वाणी मासिकलाई निरन्तररूपमा प्रकाशित गरिरहेको छ । एकातिर आध्यात्मिक पत्रिकामार्फत संस्थाले आध्यात्मिक गतिविधिलाई समाजसामु लगिरहेको छ भने अर्कोतिर गोरक्ष निखिल सन्देश नामक साप्ताहिक रेडियो कार्यक्रमबाट पनि यसले आफ्नो अभियानलाई तीव्र बनाइरहेको छ । समाजमा योग्य, सबल, चरित्रवान् नागरिकहरूको उत्पादनका लागि शैक्षिक मिशनअन्तर्गत गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रम सञ्चालन गरिरहेको यस संस्थाका विभिन्न तह र तप्कामा रहेका कार्यकर्ताहरूका लागि मासिक प्रशिक्षण तथा तालिमको पनि व्यवस्था हुँदै आएको छ ।

हाल अ.ना.प. शैली अपनाएर अगाडि बढिरहेको यो संस्थाको सांगठनिक स्वरूपअन्तर्गत सम्पर्क कार्यालयहरूको सञ्चालन भइरहेको छ भने यसै शैलीभित्र क्षेत्रीय कार्यालयहरूको पनि विकास भइरहेको छ । संस्थाको विकास र विस्तार हुने क्रममा कतिपय सम्पर्क कार्यालयका आफ्नै भवन बनिसकेका छन् भने कतिपयमा भवनका लागि जग्गाको व्यवस्था भइसकेको छ । थुप्रै सम्पर्क कार्यालयहरूमा विभिन्न स्तरका ध्यानका कार्यक्रमहरूका अतिरिक्त परामर्श सेवालगायत तान्त्रिक हिलिङ्ग पनि सञ्चालन भइरहेका छन् । यसप्रकार यो केन्द्रले आध्यात्मिक युग निर्माणको दिशामा अग्रणी भूमिका निर्वाह गरिरहेको छ ।

# आत्मिक निवेदन

*आत्मीय पाठकवर्ग,*

*'गोरक्ष निखिल वाणी' पत्रिका यहाँहरुलाई कस्तो लागिरहेको छ? अनेक बाधा, अड्चन एवं समस्याहरुका बावजुद पत्रिकालाई निरन्तरता दिँदै प्रबुद्ध पाठकहरुको कसीमा आफूलाई घोट्दै शुद्धता एवं स्तरीयतामा क्रमशः वृद्धि गर्दै जाने हाम्रो संकल्प एवं प्रयास रहँदै आएको छ। भौतिकतामा चुर्लुम्म डुबेको आजको समाजमा एउटा आध्यात्मिक पत्रिकालाई नियमितता दिनु र आफ्नो खुट्टामा उभिन सक्ने बनाउनु भनेको निश्चय पनि असम्भवजस्तो लाग्दछ। तर परमपूज्य सद्गुरुदेवहरुको आशीर्वादले यो असम्भवलाई सम्भव बनाउने कार्य तपाईंहरुबाटै भइसकेको छ। पत्रिकालाई युगौं-युगसम्म जीवन्त राखी आउँदो पुस्तालाई हाम्रो आध्यात्मिक धरोहरको रुपमा हस्तान्तरण गर्ने जिम्मेवारी पनि तपाईं, हाम्रै काँधमा आएको छ।*

*प्रत्येक व्यक्ति स्वयं आध्यात्मिक पथमा अग्रसर भई आफ्नो परिवार, टोल, छिमेक, समाज, गाउँ, सहर, जिल्ला, अञ्चल हुँदै सम्पूर्ण देश अनि सम्पूर्ण विश्वलाई नै अध्यात्ममय बनाउने महान् अभियानलाई मूर्तरुप दिन पत्रिका सबैभन्दा सशक्त माध्यम बन्न सक्छ। अतः पत्रिका सदस्यता विस्तारको कार्यक्रममा यहाँहरुको सहयोगको अपेक्षा गर्दछौं।*

*पत्रिकाको बिक्री मूल्य रू. ३०।- मात्र भएकोले तपाईंले कम्तीमा दसवटा पत्रिका मगाएर आफ्ना नाता-गोता, छरछिमेकमा बाँड्न सक्नुहुन्छ। तपाईंको घर, टोल, छिमेक वा नातागोतामा कहीं पनि पूजा-आजा, हवन, विवाह, व्रतबन्ध, सप्ताह, जन्मदिन, मेला, पर्व, महोत्सव आदि हुँदैछन् भने त्यहाँ पत्रिकाको स्टल राखेर यसको महत्त्वबारे जानकारी गराउनुका साथै वार्षिक सदस्यताको लागि प्रेरित गर्न सक्नुहुन्छ।*

*यसका अलावा टाढा-टाढा रहेका आफ्ना नाता-गोता, मित्रजनलाई हुलाकमार्फत पत्रिका पठाउन सक्नुहुन्छ। यसो गर्दा आत्मिक सम्बन्ध अझ प्रगाढ हुन जान्छ।*

*यो पत्रिका यहाँहरुको आफ्नै भएकोले यसलाई फलाउने, फुलाउने र फैलाउने जिम्मा पनि यहाँहरुकै हो। यसैले, सम्पूर्ण पाठकहरुमा हाम्रो आत्मिक निवेदन छ– आफूलगायत कम्तीमा पाँचजना वार्षिक सदस्य बनाउने संकल्प आजकै दिनदेखि गरौं।*

*यहाँहरु सबैको सहयोगले पत्रिकाको सदस्य सङ्ख्या निरन्तररुपमा वृद्धि हुँदै जानेछ जसले गर्दा पत्रिकालाई अझ स्तरीय एवं आकर्षक बनाउन मद्दत मिल्नेछ भन्ने कुरामा हामी विश्वस्त छौं।*

*वार्षिक सदस्यताको लागि रु. ३५०।- (अक्षरेपी रु. तीन सय पचास मात्र) हामीलाई पठाउनुहोस्। त्यसपछिको बाँकी काम हामी गर्नेछौं।*

*अन्तमा, आत्मीय पाठकवर्गहरुमा विनम्र अनुरोध छ कि पत्रिकाको स्वयंले अध्ययन गरौं एवं आफ्नो परिवार तथा इष्टमित्रलाई पनि पढ्न अनुरोध गरौं। यसका अलावा अन्य पाँचजना व्यक्तिलाई पढाउने प्रयास गरौं।*

*संसारको सबैभन्दा ठूलो दान ज्ञान दान हो, तपाईंको सानो दानले कसैको जीवनमा नयाँ मोड आउन सक्छ, जीवनमा सदाबहार छाउन सक्दछ। त्यसैले परमपूज्य सद्गुरुदेवहरुको महान् योजनालाई मूर्तरुप दिँदै चरितार्थ गराउन आजदेखि गुरु कार्यमा सहभागी बनौं र यस योजनालाई आ-आफ्नो तरीकाबाट सहयोग गरौं।*

*पत्रिकाको बिक्री हाम्रो उद्देश्य होइन, अपितु परमपूज्य सद्गुरुदेवहरुको असीम अनुकम्पाले प्रत्येक जन-जनमा गोरक्ष निखिल ऊर्जाको सञ्चार गरी आध्यात्मिक युगको पुनः निर्माण गर्नु हो। अस्तु।*

# श्रीशिवतत्त्व

शिव नै समस्त प्राणीहरूका अन्तिम विश्रामस्थल हुनुहुन्छ– 'विश्रामस्थानमेकम्' । 'शीङ् स्वप्ने' धातुबाट 'शिव' शब्दको सिद्धि भएको छ । 'शेरते प्राणिनो यत्र स शिवः'– अनन्त पाप-तापहरूबाट उद्विग्न भएर विश्रामका लागि प्राणी जहाँ शयन गर्दछ, बस ! उनै सर्वाधिष्ठान, सर्वाश्रयलाई शिव भनिन्छ ।

**'शान्तं शिवं चतुर्थमद्वैतं मन्यन्ते ।'**

श्रुतिहरूका अनुसार जाग्रत्, स्वप्न, सुषुप्ति यी तीनै अवस्थाबाट रहित, सर्वदृश्यविवर्जित, स्वप्रकाश, सच्चिदानन्दघन परब्रह्म नै शिवतत्त्व हो । तर पनि उनै परमतत्त्व आफ्ना दिव्य शक्तिहरूले युक्त भएर अनन्त ब्रह्माण्डको उत्पादन, पालन एवं संहार गर्दै ब्रह्मा, विष्णु, शिव आदि संज्ञाहरूलाई धारण गर्नुहुन्छ । ब्रह्मलाई कतै जीव पनि भनिएको छ– 'सोऽबिभेत् एकाकी न रेमे जाया मे स्यादथ कर्म कुर्वीय' इत्यादि श्रुतिहरूका अनुसार भय, अरमण आदियुक्त हुनाले हिरण्यगर्भ एवं विराट्लाई जीव नै भनिएको छ तथापि त्यो एक-एक ब्रह्माण्डका उत्पादक मुख्य ब्रह्मादिका साथ तादात्म्याभिमानी जीव ब्रह्मा कहलिन्छ । वास्तवमा जसरी कृषक नै खेतमा बीजारोपणबाट अङ्कुरादिको उत्पादक हुन्छ, सिञ्चनादिद्वारा पालक र अन्तमा फसल काट्ने हुन्छ, त्यसरी नै एक अनन्त-अचिन्त्य-शक्तिसम्पन्न भगवान् विश्वका उत्पादक, पालक र संहारक हुनुहुन्छ ।

**सर्वभूतेषु कौन्तेय मूर्तयः सम्भवन्ति याः ।**
**तासां ब्रह्म महद्योनिरहं बीजप्रदः पिता ॥**

भगवान् भन्नुहुन्छ– समस्त भूतहरूमा जति पनि मूर्तिहरू उत्पन्न हुन्छन्, ती सबैको महद्ब्रह्म (प्रकृति) योनि (माता) हुन् र बीज प्रदान गर्ने पिता म हुँ । 'पिताऽहमस्य जगतः'– म नै समस्त जगत्को पिता– उत्पादक हुँ ।

**मम योनिर्महद् ब्रह्म तस्मिन् गर्भं दधाम्यहम् ।**
**सम्भवः सर्वभूतानां ततो भवति भारत ॥**

अर्थात् प्रकृतिरूप योनिमा जब म गर्भाधान गर्दछु तब त्यसबाट समस्त विश्वको उत्पत्ति हुन्छ । यसप्रकार ब्रह्माण्डोत्पादक ब्रह्म पनि परमेश्वर नै हुनुहुन्छ । अतएव–

**'यतो वा इमानि भूतानि जायन्ते, येन जातानि जीवन्ति, यत्प्रयन्त्यभिसंविशन्ति ।'**

यस श्रुतिवाक्यले जुन ब्रह्मको लक्षण बताएको छ, त्यसबाट विश्वको उत्पादक, पालक एवं संहारकलाई परमेश्वर बुझ्नुपर्दछ । यदि यी तीनै पृथक्-पृथक छन् भने तब त कुनै पनि परमेश्वर सिद्ध हुन सक्नुहुन्न किनकि निरतिशय ऐश्वर्य र सर्वज्ञ-गुण-सम्पन्नलाई परमेश्वर भनिन्छ । यदि उहाँहरू तीनै सर्वशक्तिसम्पन्न परमेश्वर हुनुहुन्छ भने यो प्रश्न उठ्छ कि उहाँहरू तीनैजनाले सल्लाह गरेर कार्य गर्नुहुन्छ वा आ-आफ्नो इच्छानुसार स्वतन्त्र भएर ? यदि सल्लाहबाट गर्नुहुन्छ भनेर मान्ने हो भने परमेश्वर त कोही पनि हुनुभएन । यद्यपि उहाँहरू तीनको समिति वा परिषद् नै परमेश्वर हो किनकि एक्लै कोही पनि कार्य गर्न स्वतन्त्र हुनुहुन्न । यदि तीनैका इच्छा समान छन् भने र तीनैको इच्छानुसार नै शक्तिहरू कार्यमा प्रवृत्त हुन्छन् भने पनि त्रिदेव मान्नु व्यर्थ हुन्छ किनभने एकैबाट ती सबै कार्य सम्पन्न भइहाल्नेछ । यदि द्वितीय पक्ष स्वीकार गर्ने हो भने अर्थात् स्वतन्त्रताबाट पनि तीनैले कार्य गर्न सक्नुहुन्छ भने तब पनि यसबाट कोही परमेश्वर सिद्ध हुन सक्नुहुन्न किनकि स्वतन्त्रताबाट यदि इच्छा उत्पन्न भएमा सम्भव छ कि एकलाई जगतपालनको रुचि होला र त्यसै समयमा अर्कोलाई संहारको रुचि उत्पन्न हुन सक्छ । यस अवस्थामा जसको इच्छा सफल हुन्छ, उसैको निरंकुश ऐश्वर्य हुनेछ । जसको मनोरथ भग्न भयो, उसको ईश्वरता औपचारिक हुनेछ । एउटा विषयमा विरुद्ध दुई प्रकारका इच्छाहरूको सफलता असम्भव नै छ । यसप्रकार अनेक ईश्वरको अस्तित्व हुनु कसैको मतमा पनि सम्भव देखिन्न । अतः एकेश्वरवाद नै सबैलाई स्वीकार्य हुन सक्छ । त्यसैले महानुभावहरूले एकमा नै अवस्थाभेदले उत्पादकत्व, पालकत्व र संहारकत्व मानेका छन् ।

**निःश्वसितमस्य वेदा वीक्षितमेतस्य पञ्चभूतानि ।**
**स्मितमेतस्य चराचरमस्य च सुप्तं महाप्रलयः ॥**

भगवान्को निःश्वासबाट नै वेदहरूको प्रादुर्भाव हुन्छ । वीक्षण (देखा पर्नु) बाट आकाशादि अपञ्चीकृत पञ्चमहाभूतको सृष्टि हुन्छ । स्मित (मन्दहाँसो, मुस्कुराहट) बाट भौतिक अनन्त ब्रह्माण्ड बन्न जान्छन् र सुप्तिबाट

नै निखिल ब्रह्माण्डको प्रलय हुन्छ । यस दृष्टिबाट एक ब्रह्माण्डको उत्पादक, पालक, संहारक ब्रह्मा, विष्णु, शिवका अतिरिक्त निखिल ब्रह्माण्डहरूका उत्पादक, पालक, संहारक ब्रह्मा, विष्णु र शिवमा किञ्चित मात्र पनि भेद छैन । जसरी एउटै गगनस्थ सूर्य अनन्त घटमा प्रतिविम्बित हुन्छ, त्यसरी नै एक नै अखण्ड, अनन्त, निर्विकार, चिदानन्द परमात्मतत्त्व अनन्त अन्त:करणमा र मायाभेदहरूमा प्रतिविम्बित हुन्छन् । अन्त:करणगत प्रतिविम्ब नै जीव भनिन्छ । मायागत प्रतिविम्ब नै ईश्वर भनिन्छ । जसरी अन्त:करणका स्वच्छत्वादितारतम्यले जीवहरूमा काल्पनिक भेद हुन्छ, त्यसरी नै मायाको उत्पादकत्व, पालकत्व, संहारकत्व-शक्तिको भेदले ब्रह्मा, विष्णु, रुद्रमा काल्पनिक भेद हुन्छ । अनन्त ब्रह्माण्डको कल्पनामा अनन्त ब्रह्माण्डको उत्पादिनी शक्तिहरू पनि अनन्त छन् । ती एक-एक शक्तिले ब्रह्माण्ड र त्यसअन्तर्गत अनन्त जीवन एवं उत्पादक, पालक, संहारक ब्रह्मा, विष्णु, रुद्र व्यक्त हुन्छन् । तर यी सबै प्रतिविम्बहरूको मूलभूत जुन विम्ब छ, त्यो त सर्वथा एक नै हो । उनै विष्णुभक्तहरूका लागि विष्णुरूपमा, रामभक्तहरूका लागि रामरूपमा, शिवभक्तहरूका लागि शिवरूपमा दृष्टिगोचर हुन्छ । जसरी एकै गगनस्थ सूर्य निलो चश्माबाट निलो, पहेँलोबाट पहेँलै देखिन्छ, त्यसरी नै विष्णु भावनाले भावित अन्त:करण विष्णुभक्त उनै परमतत्त्वलाई विष्णु भन्दछन्, शिव भावनाले भावितमनस्क उनै परमतत्त्वलाई शिव भन्दछन् र उनै श्रीकृष्ण, श्रीराम आदिरूपमा उपलब्ध हुनुहुन्छ । उहाँ नै गगनस्थ सूर्यस्थानीय परमतत्त्व 'शिव-स्कन्दादि' पुराणका शिव हुनुहुन्छ, उहाँलाई 'विष्णुपुराण', 'रामायण', 'भागवत्' आदि सद्ग्रन्थहरूमा विष्णु, राम, कृष्णरूपमा लिइएको पाइन्छ । भक्तहरूको भावनानुसार नै त्यस परमतत्त्वको विशुद्धसत्त्वमयी दिव्यशक्तिको योगबाट मधुर मनोहर मूर्ति पनि व्यक्त हुन्छ । यसप्रकार मूलत: शिव एवं विष्णु एकै हुनु भए पनि उहाँहरूको अपररूपमा सत्त्वको योगबाट विष्णुलाई सात्त्विक र तमको योगबाट रुद्रलाई तामस मानिन्छ । वस्तुत: सत्त्वनियन्ता विष्णु र तमनियन्ता रुद्र हुनुहुन्छ । तम नै मृत्यु हो, काल हो । अत: त्यसको नियन्ता महामृत्युञ्जय महाकालेश्वर भगवान् रुद्र हुनुहुन्छ । अर्को दृष्टिले हेर्ने हो भने जसरी तम: प्रधान सुषुप्तिबाट नै जाग्रत्-स्वप्नको सृष्टि हुन्छ, त्यसरी नै तम: प्रधान प्रलयावस्थाबाट नै सर्वप्रपञ्चको सृष्टि हुन्छ ।

कृष्णका अनन्य प्रेमी भक्तगण तमलाई अत्यन्तै उच्च अथवा सर्वोत्कृष्ट मान्छन् । प्रेममयी आसक्ति मोह, मूर्च्छा,

# ब्रह्मा-विष्णुकृत शिव-स्तवन

**नमस्तुभ्यं भगवते सुव्रतेऽनन्ततेजसे ।**
**नमः क्षेत्राधिपतये बीजिने शूलिने नमः ॥**
**नमस्ते ह्यस्मदादीनां भूतानां प्रभवाय च ।**
**वेदकर्मावदातानां द्रव्याणां प्रभवे नमः ॥**
**विद्यानां प्रभवे चैव विद्यानां पतये नमः ।**
**नमो व्रतानां पतये मन्त्राणां पतये नमः ॥**
**अप्रमेयस्य तत्त्वस्य यथा विद्मः स्वशक्तितः ।**
**कीर्तितं तव माहात्म्यमपारं परमात्मनः ॥**
**शिवो नो भव सर्वत्र योऽसि सोऽसि नमोऽस्तु ते ॥**

(ब्रह्मा र विष्णु स्तुति गर्दै भन्नुहुन्छ– भगवन् ! हजूर सुव्रत र अनन्त तेजोमय हुनुहुन्छ, हजूरलाई प्रणाम छ ! हजूर क्षेत्राधिपति तथा विश्वका बीजस्वरूप र शूलधारी हुनुहुन्छ, हजूरलाई नमस्कार छ। हजूर हामी सबै भूतहरूका उत्पत्तिस्थान र वेदोक्त सबै श्रेष्ठ यज्ञादि कर्महरूलाई सम्पन्न गराउनुहुने, समस्त द्रव्यका स्वामी हुनुहुन्छ, हजूरलाई नमस्कार छ । हजूर व्रत एवं मन्त्रहरूका स्वामी हुनुहुन्छ, हजूरलाई नमस्कार छ। हजूर अप्रमेय तत्त्व हुनुहुन्छ। आफ्नो शक्तिले जस्तो हामीले हजूरलाई बुझ्यौं, त्यस्तै हजूरको अपार माहात्म्यको यशोगान गर्‍यौं। हजूर हाम्रा लागि सर्वत्र कल्याणकारक हुनुहोस् । हजूर जे हुनुहुन्छ, त्यही हुनुहुन्छ अर्थात् अज्ञेय र अगम्य हुनुहुन्छ, हजूरलाई नमस्कार छ ।

(वायुपुराण, पूर्वा०)

सात्त्विक विवेक-प्रकाशले गर्दा कतै अधिक महत्त्वको हुन्छ। वास्तवमा कुनै पनि कार्यमा अवष्टम्भ (रोकावट) प्रकाश र हलचल-प्रवृत्ति-चेष्टाको अपेक्षा हुन्छ । तीनैरूपमा एकको बिना पनि कार्य हुँदैन । प्राकृत वा अप्राकृत दिव्यभन्दा दिव्य कार्यहरूमा पनि अवष्टम्भको अपेक्षा रहन्छ, त्यही दिव्य अवष्टम्भ तम हो । यसै तामस भावनालाई अत्यन्त महत्त्व दिइएको पाइन्छ । श्रीमद्भागवत्को तामसफल (रासलीला) प्रकरणले सर्वाधिक महत्त्व राखेको छ। त्यसै पनि विश्रामका लागि तामस सुषुप्तिको यस्तो महिमा छ कि इन्द्रादि दिव्य भोग-सामग्री-सम्पन्न भएर पनि त्यसलाई छोडेर सुषुप्ति चाहन्छन् । चिन्तन, मनन सात्त्विक भएर पनि सुषुप्तिको प्रतिबन्धक हुनाले उद्वेजक मानिन्छ। जब जाग्रदादि अवस्थामा द्वैतदर्शनबाट जीवन उद्विग्न हुन्छ तब उसलाई विश्रामका लागि सुषुप्तिको आश्रयण अनिवार्य मानिन्छ। यसरी नै जब सृष्टिकालको उपद्रवहरूले जीवन व्याकुल हुन जान्छ तब उसलाई दीर्घ सुषुप्तिमा विश्रामका लागि भगवान् सर्वसंहार

गरेर प्रलयावस्था व्यक्त गर्दछन् ।

यो संहार नै भगवान्को कृपा हो । जसरी दुश्चिकित्स्य व्रणबाट व्याकुल व्यक्तिलाई देखेर चिकित्सक करुणावश व्रण छेदनका लागि तीक्ष्ण शस्त्रलाई ग्रहण गर्दछ, त्यसरी नै दुर्निवार्य पाप-ताप बढ्नाले करुणावश नै भगवान् विश्वको संहार गर्दछन्–

**जिमि सिसु तन ब्रन होइ गोसाईं**
**मातु चिराव कठिन की नाईं ॥**

(रामचरित्रमानस, उत्तर० ७४।८)

कार्यावस्थाबाट कारणावस्थाको महत्त्व स्पष्ट नै छ । तमः प्रधानावस्था हो, यसैबाट उत्पादनावस्था र पालनावस्था व्यक्त हुन्छ । अन्तमा सबैले प्रलयावस्थामा जानै पर्दछ–

**'भूतग्रामः स एवायं भूत्वा भूत्वा प्रलीयते ।'**

अर्थात् यो समस्त भूतग्राम अनन्तकालदेखि उत्पन्न हुँदै हुँदै पुनः पुनः प्रलयावस्थालाई प्राप्त हुन्छ । कारणबाट नै सबैको उत्पत्ति र त्यसैमा पालन र पुनः त्यसैमा सबैको संहार हुन्छ। निःस्तब्ध समुद्रबाट नै तरङ्गको उत्पत्ति, त्यसैमा उसको पालन, अन्तमा फेरि पनि उसैमा संहार हुन्छ । उत्पादनावस्थाका नियामक ब्रह्मा, पालनावस्थाका नियामक विष्णु र संहारावस्था एवं कारणावस्थाका नियामक शिव हुनुहुन्छ। पहिले पनि कारणावस्था रहनुहुन्छ, अन्तमा पनि उही रहनुहुन्छ । यसप्रकार प्रथम पनि शिव, अन्तमा पनि शिव नै तत्त्व अवशिष्ट रहनुहुन्छ–

**अहमेवासमेवाग्रे नान्यद्यत्सदसत्परम् ।**
**पश्चादहं यदेतच्च योऽवशिष्येत सोऽस्म्यहम् ॥**

तत्त्वज्ञहरू त्यसैमा आत्मभाव गर्दछन् । जो चराचर प्रपञ्चको उत्पत्ति पहिले हुन्छ, उहाँको महिमा र वीर्यवत्ता प्रसिद्ध छ। अतः उहाँ मुख्य निरूपचरित ईश्वर वा महेश्वर हुन्छ ।

अतः शिवजी नै केवल 'ईश्वर' शब्दबाट कहलिन्छ ।

'ईशानः सर्वविद्यानामीश्वरः सर्वभूतानाम् ।'

'महेश्वरस्त्र्यम्बक एव नापरः ।'

'ईश्वरः सर्वभूतानां हृद्देशेऽर्जुन तिष्ठति ।'

अर्थात् ईशान नै सर्वविद्याहरू एवं भूतहरूका ईश्वर हुनुहुन्छ । उहाँ नै महेश्वर हुनुहुन्छ, उहाँ नै समस्त प्राणीहरूको हृदयमा रहनुहुन्छ । हृदयमा नै सुषुप्ति हुन्छ, उहीँ कारणावस्थाका अधिपति हुनु युक्ति पनि छ । कहीँ उपनिषद्मा एकादश प्राणलाई 'रुद्र' भनिएको छ । यो निस्कनाले प्राणीहरूलाई रुवाउँछ, यसैले रुद्र भनिन्छ । अतः दस इन्द्रिय र मन नै एकादश रुद्र हो । तर यो आध्यात्मिक रुद्र हुनुहुन्छ जसरी विष्णु पादका अधिष्ठाता हुनुहुन्छ, त्यसरी नै रुद्र अहंकारका अधिष्ठाता हुनुहुन्छ– 'एको रुद्रो न द्वितीयोऽवतस्थे ।' अर्थात् एक रुद्र नै तत्त्व थियो, द्वित्वसंख्यापूर्त्यर्थ कुनै दोस्रो तत्त्व नै थिएन । यी श्रुतिहरूबाट प्रोक्त रुद्र त महाकारण वा कार्यकारणातीत शुद्ध ब्रह्म नै हुनुहुन्छ । उहाँ पनि 'रोदनात् रुद्र' हुनुहुन्छ, प्रलयकालमा सबैलाई रुवाउने उहाँ हुनुहुन्छ ।

**यस्य ब्रह्म च क्षत्रं च उभे भवत ओदनः ।**
**मृत्युर्यस्योपसेचनं क इत्था वेद यत्र सः ॥**

(कठोपनिषद् २।२५)

अर्थात् ब्रह्मक्षत्रोपलक्षित समस्त प्रपञ्च जसको ओदन (भात) हो, मृत्यु जसको उपसेचन (दूध, दही, दाल वा तरकारी) हुन्, त्यसलाई कसले, कसरी, कहाँ जान्ने ? जसरी प्राणी तरकारी, भात मिलाएर खान्छन्, त्यसरी विश्वसंहारक काल र समस्त प्रपञ्चलाई मिलाएर खाने परमात्मा मृत्युका पनि मृत्यु हुनुहुन्छ । अतः महामृत्युञ्जय पनि उहाँ नै हुनुहुन्छ, कालका पनि काल हुनुहुन्छ । अतः कालकाल वा महाकालेश्वर हुनुहुन्छ । यदि कोही बच्दछ भने उसको सर्वसंहारतामा बाधा उपस्थित हुन्छ, अतःएव 'योऽवशिष्येत' उहाँ नै एक ब्रह्म हुनुहुन्छ । यसैले विष्णु पनि उहाँ नै हुनुहुन्छ । यदि उहाँ शिव वा रुद्रबाट पृथक् हुनुभएमा त महामृत्युञ्जय, महाकालेश्वर, सर्वसंहारकबाट संहृत हुन जानुहुन्छ । अन्यथा एकलाई छोडेर सर्वको संहारकता नै शिवमा बुझिन्छ । सर्वसंहर्ताको सामु अरू जे पनि उपस्थित हुन्छ, त्यसबाट उसको अवश्यै संहार हुन्छ । अतः यदि कोही बच्दछ भने उसको आत्मा नै बच्दछ किनकि आफूमा संहार्य-संहारकभाव बन्दैन । यसैले शिवको आत्मा विष्णु र विष्णुको आत्मा शिव हो । त्यहाँ भिन्नता छँदैछैन जसबाट परसमवेत-क्रियाशालित्वरूप कर्मत्वको योग होस् । सर्वसंहारकमा नै निरतिशय प्राबल्य एवं परमेश्वरत्व, सर्वोत्कृष्टत्व सिद्ध हुन्छ । शेष जे पनि त्यसबाट भिन्न

## शिवनामामृत

**शिवनामतरीं प्राप्य संसाराब्धिं तरन्ति ते ।**
**संसारमूलपापानि तानि नश्यन्त्यसंशयम् ॥**
**संसारमूलभूतानां पातकानां महामुने ।**
**शिवनामकुठारेण विनाशो जायते ध्रुवम् ॥**
**शिवनामामृतं पेयं पापदावानलार्दितैः ।**
**पापदावाग्नितप्तानां शान्तिस्तेन विना न हि ॥**
**शिवेति नामपीयूषवर्षाधारापरिप्लुताः ।**
**संसारदवमध्येऽपि न शोचन्ति कदाचन ॥**
**शिवनाम्नि महद्भक्तिर्जाता येषां महात्मनाम् ।**
**तद्विधानां तु सहसा मुक्तिर्भवति सर्वधा ॥**

(शि०पु०वि० २३।२९–३३)

जसले शिवनामरूपी डुंगामा आरुढ भएर संसाररूपी समुद्रलाई पार गर्दछ, उसको जन्म-मरणरूप संसारका मूलभूत ती सारा पाप निश्चय नै नष्ट हुन जान्छन् । महामुने ! संसारका मूलभूत पातकरूपी पापहरू शिवनामबाट निश्चय नै नाश हुन जान्छन् । जो पापरूपी दावानलले पीडित छ, उसले शिवनामरूपी अमृतलाई पान गर्नुपर्दछ । पापको दावानलले दग्ध मानिस त्यस शिवनामामृत बिना शान्त हुँदैन । जो शिवनामरूपी सुधाको वृष्टिजनित धारामा पौडिरहेको छ, ऊ संसाररूपी दावानलको बीचमा उभिएर पनि कदापि शोकको भागी हुँदैन । जो महात्माहरूको मनमा शिवनामको ठूलो भक्ति छ, यस्ता व्यक्तिहरूलाई सहसा र सर्वथा मुक्ति प्राप्त हुन्छ ।

अवशिष्ट हुन्छ, ती सबैको संहार हुन जान्छ । अतः उनको अनीश्वरत्व, निकृष्टत्व, विधेयत्व, तद्वशवर्त्तित्व सुतरां सिद्ध हुन्छ ।

जो परमेश्वर भक्त, प्रेमी र ज्ञानीहरूका लागि निरतिशय, निरूपाधिक परप्रेमका आस्पद हुन्छन् र परमान्दरसरूप हुन्छन् उनै अभक्तका लागि प्रचण्ड मृत्युरूप भएर उपलब्ध हुनुहुन्छ र उनीदेखि सबै भयभीत हुन्छन् । संहारक र शासकबाट सबैलाई भय हुनु स्वाभाविक छ । यसैले भनिएको छ कि 'महद्भयं वज्रमुद्यतम् ।' अर्थात् परमेश्वर उद्यत वज्रका समान महाभयानक हुनुहुन्छ । उहाँकै भयले सूर्य, चन्द्र, अग्नि, वायु, इन्द्र नियमपूर्वक आ-आफ्ना काममा लागेका छन् । उहाँकै भयले मृत्यु पनि दौडिरहेका छन् ।

विवेकीहरूको दृष्टिमा प्रमाद नै मृत्यु हो–

**प्रमादं वै मृत्युमहं ब्रवीमि ।** (सनत्सु०)

ती समस्त प्रमादको जड मोह वा अज्ञान नै हुन् र

त्यसको अन्त गर्ने ब्रह्माकार चरम वृत्तिमाथि आरुढ शुद्ध ब्रह्म नै हो । यसप्रकार मृत्युरूप अज्ञानको नाशक हुनाले सर्वसंहारक महामृत्युञ्जय महाकालेश्वर परमतत्त्व शिव हुनुहुन्छ । उहाँ नै दिव्य मङ्गलमयी मूर्ति धारण गर्नुहुन्छ, भक्तहरूको आफ्नो उपासनामा चावपूर्वक प्रवृत्ति देखेर कौतुहलतावश स्वयं पनि भक्तिरसको आस्वादन गर्नका लागि आफैलाई उपास्य-उपासक दुई रूपमा व्यक्त गर्नुहुन्छ। बाल रामचन्द्र, बाल मुकुन्दरूपले निज हस्तारविन्दको अङ्गुष्ठलाई मुखारविन्दमा विनिवेशित गरेर चरणारविन्द-मकरन्द-लुब्ध भावुक मनोमिलिन्दहरूको लोकोत्तर सौभाग्यलाई सम्झेर स्वयं पनि भक्त बनेर श्रीशिवको उपासना गर्नुहुन्छ र शिवजीको रूपले विष्णुरूपको उपासना गर्नुहुन्छ। शिवको हृदयमा राम, रामको हृदयमा शिव हुनुहुन्छ । साम्राज्य-सिंहासनसमासीन भगवान् रामको हृदयकमलमा अभिव्यक्त श्रीशिवको प्रत्यक्ष दर्शन महर्षिहरूले गरे र शिवको हृदयमा रामको प्रत्यक्ष दर्शन हुन्छ । यसप्रकार 'सेवक स्वामि सखा सिय पीय के' शिव सर्वाराध्य परम दैवत हुनुहुन्छ ।

श्रीशिवको सगुणस्वरूप पनि अति धेरै अद्‌भुत, मधुर, मनोहर र मोहक छ कि त्यसमा सबै मोहित हुन्छन् । भगवान्‌को तेजोमय, दिव्य, मधुर, मनोहर विशुद्धसत्त्वमयी, मङ्गलमयी मूर्तिलाई देखेर स्फटिक, शङ्ख, कुन्द, दुग्ध, कर्पूरखण्ड, श्वेताद्रि चन्द्र सबै लज्जित हुन्छन् । अनन्तकोटि चन्द्र सागर मन्थनबाट समुद्‌भूत, अमृतमय, निष्कलङ्क पूर्णचन्द्र पनि उहाँको मनोहर मुखचन्द्रको आभाले लज्जित हुन्छन् । मनोहर त्रिनयन, बालचन्द्र एवं जटामुकुटमा दुग्धधवल स्वच्छाकृति गङ्गाको धारा हठात् मनलाई मोहमा लिन्छ । हस्ति-शुण्डसमान विशाल, भूतिभूषित, सुडौल, गोल, तेजोमय, अङ्गद-कङ्कण-शोभित भुजा, मुक्ता-मोतीहरूका हार, नागेन्द्रहार, व्याघ्रचर्म, मनोहर चरणारविन्द र उनमा सुशोभित नखमणि-चन्द्रिकाहरू भावुकहरूलाई अपार आनन्द प्रदान गर्दछन् । हिमाद्रिसमान धवलवर्ण स्वच्छ नन्दीगणमा विराजमान सदाशक्तिरूपा श्रीउमाका साथ श्रीशिव ठीक त्यसैप्रकार शोभित देखिनुहुन्छ जसरी धर्मतत्त्वमाथि ब्रह्मविद्यासहित ब्रह्म विराजमान हुनुहुन्छ अथवा माधुर्याधिष्ठात्री महाशक्तिका साथ मूर्तिमान् भएर परमानन्द रसामृतसिन्धु विराजमान हुनुहुन्छ ।

भगवान्‌को यस्तो सर्वमनोहारिता छ कि सबै उहाँका उपासक छन् । कालकूट विष र शेषनागलाई घाँटीमा धारण गर्नाले भगवान्‌को मृत्युञ्जयरूपता स्पष्ट हुन्छ । जटामुकुटमा श्रीगङ्गालाई धारण गरेर विश्वमुक्ति-मूललाई स्वाधीन गर्नुभयो, अग्निमय तृतीय नेत्रको समीपमा नै चन्द्रकलालाई धारण गरेर आफ्नो संहारकत्व-पोषकत्वरूप विरुद्ध धर्माश्रयत्वलाई देखाए । सर्वलोकाधिपति भएर पनि विभूति र व्याघ्रचर्मलाई नै आफ्नो भूषण-वसन बनाएर संसारमा वैराग्यलाई नै सर्वश्रेष्ठ बताउनुभयो । उहाँको वाहन नन्दी, त उमाको वाहन सिंह, गणपतिको वाहन मुसा, त स्वामी कार्तिकेयको वाहन मयूर हुन् । मूर्तिमान् त्रिशूल र भैरवादिगण उनको सेवामा सदा संलग्न छन् । ब्रह्मा, विष्णु, राम, कृष्णादि पनि उनको उपासना गर्दछन् । नर, नाग, गन्धर्व, किन्नर, सुर, इन्द्र, बृहस्पति, प्रजापति प्रभृति पनि शिवको उपासनामा तल्लीन हुन्छन् ।

उता तामसमा तामस असुर, दैत्य, यक्ष, भूत, प्रेत, पिशाच, बेताल, डंकिनी, शाकिनी, वृश्चिक, सर्प, सिंह सबै उनको सेवामा तत्पर देखिन्छन्, वस्तुतः परमेश्वरको लक्षण पनि यही हो कि उहाँलाई सबैले पूजोस् ।

साधक भगवान् शिवको जप-तप, ध्यान-पूजा, यशःश्रवण आदि जुनसुकै साधनाहरूबाट उपासना प्रारम्भ गर्दछ भने त्यसै मार्गबाट श्रीशिवले उपासनालाई सफल बनाउँदै सबै प्रकारका सिद्धिहरू तथा परासिद्धि-रूप आफैलाई पनि प्रदान गरेर उसलाई सबै प्रकारले कृतकृत एवं सुखी गर्नुहुन्छ । अतः शिवोपासना नै सर्वोत्तम धर्म, कर्म एवं साधना हो । जय गुरुदेव !

# शिवरात्रि–रहस्य

जति प्रकारका पूजा-पार्वण, व्रत-उपवास, पर्वोत्सव प्रचलित छन्, त्यसमा शिवरात्रि-व्रतसमानको प्रचार अन्य कुनैको पनि देखिन्न । हिन्दु स्त्री-पुरुष, बाल-वृद्ध, प्रौढ-युवा सबै प्रायः कुनै न कुनै रूपमा यसको अनुष्ठानमा रत देखिन्छन् । धेरैले यथाविधि पूजादि नगरेर पनि उपवास गर्दछन् । जसको उपवासमा रुचि हुँदैन, ऊ कमसेकम रात्रि जागरण गरेर नै यस व्रतको पुण्यको केही अंश लिन चाहन्छन् ।

सौर, गाणपत्य, शैव, वैष्णव र शाक्त– प्रधानतः यिनै पाँच सम्प्रदायमा विराट् हिन्दु समाज विभक्त छ । यसमा जो जसका उपासक छन्, उनीहरू आफ्ना इष्टदेवलाई छोडेर अन्यको उपासना प्रायः गर्दैनन् । तर यस शिवरात्रि-व्रतको महिमा छ– शास्त्रमा पनि यस्तै विहित छ तथा यसै विधानको आजसम्म पालन हुँदै आएको छ कि सम्प्रदाय भेदलाई त्यागेर सबै मनुष्य यसको पालन गर्दछन् र यसको फलस्वरूप भोग र मोक्ष दुवैलाई प्राप्त गर्न खोज्छन्–

**आचाण्डालमनुष्याणां भुक्तिमुक्तिप्रदायकम् ।**

शिव-पूजा र शिवरात्रि-व्रतमा केही अन्तर छ । व्रत-शब्दको निर्वचनबाट थाहा हुन्छ कि जीवनमा जो वरणीय छ– बारम्बार अनुष्ठानद्वारा मन, वचन, कर्मले जो प्राप्त गर्न योग्य छ, त्यही व्रत हो । यसैकारण प्रत्येक व्रतका साथ कुनै न कुनै कथा वा आख्यान जोडिएको पाइन्छ । यी कथाहरूमा यस्ता-यस्ता चरित्रको बारेमा उल्लेख पाइन्छ कि जोसँग त्यस व्रतको उत्पत्ति, परिणति र समाप्तिका संक्षिप्त इतिहास साथ रहन्छन् । यसका अतिरिक्त यी कथाहरूद्वारा यो पनि प्रमाणित हुन्छ कि व्रत मानवजीवनको धर्म-पिपासाको परितृप्तिका लागि केवल बीच-बीचमा मात्र अनुष्ठान नगरी यो त हाम्रो व्यावहारिक जीवनको एउटा प्रधान अङ्ग बन्न सक्छ ।

ईशान-संहितामा शिवरात्रि-व्रतको सम्बन्धमा भनिएको छ–

**माघकृष्णाचतुर्दश्यामादिदेवो महानिशि ।**<br>
**शिवलिङ्गतयोद्भूतः कोटिसूर्यसमप्रभः ॥**<br>
**तत्कालव्यापिनी ग्राह्या शिवरात्रिव्रते तिथिः ॥**

अर्थात् माघ महिनाको कृष्णचतुर्दशीको महानिशामा आदिदेव महादेव कोटि सूर्यका समान दीप्तिसम्पन्न भई शिवलिङ्गको रूपमा आविर्भूत हुनुभएको थियो । अतएव शिवरात्रि-व्रतमा उनै महानिशाव्यापिनी चतुर्दशीलाई ग्रहण गर्नुपर्दछ ।

ईशानसंहिताको मतमा शिवको प्रथम लिङ्गमूर्ति उक्त तिथिको महानिशामा पृथ्वीबाट पहिलोपटक आविर्भूत भएको थियो । यसैको उपलक्ष्यमा यस व्रतको उत्पत्ति बताइएको छ । यस श्लोकको 'महानिशा' शब्द पनि एउटा विशिष्ट अर्थको ज्ञापक हो । महर्षि देवल भन्दछन्–

**महानिशा द्वे घटिके रात्रेर्मध्यमयामयोः ।**

चतुर्दशी तिथियुक्त चार प्रहर रात्रिको मध्यवर्ती दुई प्रहरमा पहिलोको अन्तिम र दोस्रोको आदि– यी दुई घटिकाहरूको (घडी) नै महानिशा संज्ञा हो ।

व्रतकथाहरूमा भनिएको पाइन्छ– एकपटक कैलास-शिखरमा स्थित पार्वतीले शंकरसँग सोध्नुभयो–

**कर्मणा केन भगवन् व्रतेन तपसापि वा ।**<br>
**धर्मार्थकाममोक्षाणां हेतुस्त्वं परितुष्यति ॥**

अर्थात् हे भगवन् ! धर्म, अर्थ, काम र मोक्ष यी चतुर्वर्गका हजूर नै हेतु हुनुहुन्छ । अतः यो जान्ने इच्छा छ कि कुन कर्म, कुन व्रत वा कुन प्रकारको तपस्याले हजूर प्रसन्न हुनुहुन्छ ?

यसको उत्तरमा भगवान् शंकर भन्नुहुन्छ–

**फाल्गुणे कृष्णपक्षस्य या तिथिः स्याच्चतुर्दशी ।**<br>
**तस्यां या तामसी रात्रिः सोच्यते शिवरात्रिका ॥**

**तत्रोपवासं कुर्वाणः प्रसादयति मां ध्रुवम् ।**
**न स्नानेन न वस्त्रेण न धूपेन न चार्चया ॥**
**तुष्यामि न तथा पुष्पैर्यथा तत्रोपवासतः ॥**

'फाल्गुणको कृष्णपक्षको चतुर्दशी तिथिको आश्रय लिएर जुन अन्धकारमयी रजनीको उदय हुन्छ, त्यसैलाई 'शिवरात्रि' भनिन्छ । यस दिन जो उपवास बस्दछ उसले निश्चय नै मलाई सन्तुष्ट गर्दछ । त्यस दिन उपवास गर्नाले म जसरी प्रसन्न हुन्छु त्यसरी त स्नान, वस्त्र, धूप, र पुष्पको अर्पणबाट पनि हुँदैन ।'

उपर्युक्त श्लोकबाट यो बुझ्न सकिन्छ कि यस व्रतको उपवास नै प्रधान अङ्ग हो । त्यसैले रात्रिको चार प्रहरमा चारपटक पृथक्-पृथक् पूजाको विधान पनि पाइन्छ–

**दुग्धेन प्रथमे स्नानं दध्ना चैव द्वितीयके ।**
**तृतीये तु तथाऽज्येन चतुर्थे मधुना तथा ॥**

'प्रथम प्रहरमा दूधद्वारा शिवको ईशान-मूर्तिको, द्वितीय प्रहरमा दहीद्वारा अघोर-मूर्तिको, तृतीयमा घिउद्वारा वामदेव मूर्तिको एवं चतुर्थमा महद्वारा सद्योजात-मूर्तिलाई स्नान गराएर पूजन गर्नुपर्दछ ।' प्रभातमा विसर्जनपछि व्रत-कथा सुनेर अमावास्यामा यसो भनेर पारण गर्नुपर्दछ–

**संसारक्लेशदग्धस्य व्रतेनानेन शंकर ।**
**प्रसीद सुमुखो नाथ ज्ञानदृष्टिप्रदो भव ॥**

'हे शंकर ! म नित्य संसारको यातनाले दग्ध भइरहेको छु, यस व्रतबाट हजूर मसँग प्रसन्न हुनुहोस् । हे प्रभो ! सन्तुष्ट भएर हजूरले मलाई ज्ञानदृष्टि प्रदान गर्नुहोस् ।'

शास्त्रीय अनुष्ठानको मूलमा सर्वत्र नै एउटा गूढ उद्देश्य निहित हुन्छ किनकि–

**अज्ञातज्ञापकं हि शास्त्रम् ।**

शास्त्रको कार्य नै यस्तो हो कि जुन ज्ञात छैन, त्यसको ज्ञात गराउनु । शिवरात्रिको व्रतानुष्ठानमा शास्त्रको कुन गूढ उद्देश्य निहित छ, त्यसले कुन अज्ञात तत्त्वलाई बताउँछ– यसको हामीलाई ज्ञान हुनुपर्दछ नत्र त अनुष्ठानको कुनै सार्थकता रहँदैन । तर यस अन्तर्निहित तात्पर्यलाई जान्नुपूर्व यससँग जुन कथा जोडिएको छ, त्यसलाई संक्षेपमा जान्नु आवश्यक छ ।

कुनै समयमा एकजना व्याधा शिकारका लागि वनमा गयो । त्यहाँ अनेक मृगको शिकार गरेर फर्कंदा बाटोमा ऊ थकित भएर रूखमुनि सुत्यो । निद्रा खुलेपछि हेर्दा त साँझ परिसकेको थियो । चारैतिर भीषण अन्धकार छाएको हुनाले बाटो पहिल्याउन गाह्रो थियो । त्यसबेला घर फर्कनु असम्भव देखेर ऊ हिंसक जनावरबाट हुने आक्रमणको डरले रूखमा चढेर त्यसैमा रात बिताउने विचार गर्न लाग्यो । त्यस दिन सौभाग्यवश शिवरात्रि थियो र जुन रूखमा ऊ चढेको थियो, त्यो बेलको रुख थियो र त्यसको फेदमा अति प्राचीन एउटा शिवलिङ्ग थियो । व्याधा शिकारका लागि सबेरै घरबाट बाहिर निस्किएको थियो र त्यसबेलादेखि उसले केही खाएको थिएन । यसप्रकार उसको उपवास पनि अन्जानमा नै हुन गएको थियो । यस अद्भुत मणिकाञ्चन-संयोगले र महादेव 'आशुतोष' हुनुभएकोले वसन्तको रात शीतको थोपाले भिजेका बिल्वपत्र व्याधाको शरीर छुँदै शिवको त्यस लिङ्गमूर्तिमा गएर खस्नाले आशुतोषको तोषको सीमा नै रहेन । फलस्वरूप आजीवन दुष्कर्म गरेर पनि अन्तकालमा त्यस व्याधालाई शिवलोकको प्राप्ति भयो ।

शिवरात्रिको व्रतको स्वरूप र त्यसको कथा संक्षेमा यही हो । यसको तत्त्वलाई बुझ्नका लागि केही गहिराइका साथ विचार गर्नुपर्ने हुन्छ । शिव को हुनुहुन्छ ? उहाँ कुनै पौराणिक देवता हुनुहुन्छ वा वेदमा पनि यसको वर्णन मिल्दछ ? वेदको अनेकौं स्थानमा उहाँको रुद्र नामले सम्बोधन गरिएको पाइन्छ । साधना पथमा उहाँ नै ब्रह्मवादीहरूका ब्रह्म, साङ्ख्यमतावलम्बीहरूका पुरुष तथा योगपथमा आरुढ हुनेहरूका लागि सहस्रारमा स्थित प्रणवको अर्धमात्राको रूपमा चित्रित हुनुभएको छ । पुराणहरूमा उहाँको आधिदैविक स्वरूपलाई अधिक विस्तार तथा उहाँका विविध लीलाहरूको वर्णन हुँदा पनि त्यसमा त्यही गूढ आध्यात्मिक तत्त्व अन्तर्निहित छ । शिवरात्रि-व्रतमा पनि शिवको यही दार्शनिक परिचय अन्त:सलिला फल्गुको धारासमान प्रच्छन्नरूपेण प्रवाहित भइरहेको छ । त्यसै स्वादु सुशीतल धारमा अवगाहन गर्नका लागि हामीलाई अझै गहिराइमा पौडन आवश्यक छ । यस व्रतमा उपवासको प्रधानता किन भयो तथा 'पारण' शब्दको यथार्थ अभिप्राय के हो, यी सबै प्रश्नहरूको एक-एक उत्तर थाहा हुनु आवश्यक छ ।

'उपवास' शब्दको के अर्थ हो ? ('आहारनिवृत्तिरूपवास:') साधारणत: निराहार रहनुलाई नै उपवास भनिन्छ । तर यस निर्वचनभित्र नै यसको वास्तविक अर्थको पनि संकेत वर्तमान छ । 'आङ्' पूर्वक 'हृ' धातुबाट कर्मवाच्यमा 'घञ्' प्रत्यय लगाउँदा 'आहार' शब्द व्युत्पन्न हुन्छ । यस व्युत्पत्तिअनुसार जे जति आहृरण गरिन्छ, संचय गरिन्छ, त्यही आहार हो–

**आह्रियते मनसा बुद्धया इन्द्रियैर्वा इति आहारः ।**

मन, बुद्धि अथवा इन्द्रियहरूद्वारा जुन बाहिरबाट भित्र आहृत, संग्रहित हुन्छ, त्यसैको नाम आहार हो । स्थूल र सूक्ष्मभेदले यो आहार साधारणत: दुई प्रकारका छन् । मन आदिद्वारा आहृत संस्कार नै सूक्ष्म आहार हो र पञ्च ज्ञानेन्द्रियद्वारा गृहीत शब्द-स्पर्श-रूपादि स्थूल आहार हो ।

यसका अतिरिक्त हामीले जसलाई 'आहार' भन्छौँ त्यो चामल, दाल, व्यञ्जनादि सर्वथा स्थूलतर आहार हुन् ।

'उपवास' शब्दको धातुमूलक अर्थ 'कसैको समीप रहनु' हो त्यसैले यहाँ 'शिवको समीप रहनु' हो । उपनिषद्मा जसलाई 'शान्तं शिवमद्वैतं यच्चतुर्थं मन्यन्ते' भनिएको छ, त्यस शिवसमीप जानाले स्वाभाविकरूपमा जीवहरूको मन-प्राणका समस्त रंगीन बत्तीहरू आफै निभ्न लाग्दछन् । यसैबाट उपवासको अर्थ हुन्छ– आहार-निवृत्ति अर्थात् सूक्ष्म, स्थूल एवं स्थूलतर आहारको अत्यन्तै अभाव । यो उपवास यदि यथोचितरूपेण अनुष्ठित हुन्छ भने व्रतको बहिरङ्ग अनुष्ठानमा कमी भए पनि कुनै हानि हुँदैन । यसैकारण शिवरात्रि-व्रतमा 'उपवास' नै प्रधान अङ्ग हो ।

शिवरात्रि-व्रत रातमा नै किन हुन्छ ? यस प्रश्नको उत्तर खोज्नु आवश्यक छ। जसरी नदीमा ज्वारभाटा आउँछ, त्यसरी नै यस विराट् ब्रह्माण्डमा सृष्टि र प्रलयको दुई विभिन्नमुखी स्रोत नित्य बहिरहेको छ । मानचित्रमा जसरी पृथ्वीको विस्तारलाई सानो आकारमा पाएर त्यसलाई समात्नु हाम्रो लागि सहज छ, त्यसरी नै यस विराट् ब्रह्माण्डमा सृष्टि र प्रलयको जुन सुदीर्घ स्रोत प्रवाहित भइरहेको छ, दिवस र रात्रिको क्षुद्र सीमामा त्यसलाई धेरै सानो आकारमा प्राप्त गरेर त्यसलाई अधिगत गर्नु हाम्रो लागि सम्भव छ । शास्त्रमा पनि दिवस र रात्रिको नित्य-सृष्टि र नित्य-प्रलय भनिएको छ। एकबाट अनेक र कारणबाट कार्यतिर जानु नै सृष्टि हो र ठीक यसको विपरीत अर्थात् अनेकबाट एक र कार्यबाट कारणतिर जानु नै प्रलय हो। दिनमा हाम्रो मन, प्राण र इन्द्रियहरू हाम्रो आत्माको नजिकबाट भित्रबाट बाहिर विषय-राज्यतिर दौडन्छ र विषयानन्दमा नै मग्न रहन्छ। पुन: रात्रिमा विषयहरूलाई छोडेर आत्मातिर, अनेकलाई छोडेर एकतिर, शिवतिर प्रवृत्त हुन्छ । हाम्रो मन दिनमा प्रकाशतिर, सृष्टितिर, भेदभावतिर, अनेकतिर, जगत्तिर, कर्मकाण्डतिर जान्छ र पुन: राति फर्कन्छ– अन्धकारतिर, लयतिर, अभेदतिर, एकतिर, परमात्मातिर र प्रेमतिर । दिनमा कारणबाट कार्यतिर जान्छ र राति कार्यबाट कारणतिर फर्केर आउँछ । यसैले दिन सृष्टिको र रात प्रलयको द्योतक हो । 'नेति-नेति'को प्रक्रियाद्वारा समस्त भूतको अस्तित्व मेटेर समाधियोगमा परमात्माको आत्मसमाधानको साधना नै शिवको साधना हो । यसैले राति नै यसको मुख्य काल– अनुकूल समय हो । प्रकृतिको स्वाभाविक प्रेरणाले त्यसबेला प्रेम-साधना, आत्मनिवेदन सहजरूपमा सुन्दर हुन्छ ।

शिवरात्रिको अनुष्ठान राति नै किन भन्ने सम्बन्धमा जानकारी भयो । अब चतुर्दशी तिथिसँग यसको घनिष्ट सम्बन्ध किन भयो भन्ने बुझ्नु आवश्यक छ । तर चतुर्दशी तत्त्वलाई बुझ्नुअघि 'अमावास्या' के लाई भनिन्छ, यो जान्नुछ । 'अमा' पूर्वक 'वस्' धातुका साथ 'ण्यत्' प्रत्ययको योगबाट 'अमावास्या' शब्द व्युत्पन्न हुन्छ । यसको व्युत्पत्ति यसरी गर्नुपर्दछ कि– अमा=सह अर्थात् एक साथ वास गर्दछ– अवस्थान गर्दछ र सूर्य र चन्द्र जुन तिथिमा छ, त्यही अमावास्या हो । यो व्याकरण र ज्योतिषसम्मत अर्थ हो । तर साधना-राज्यमा सूर्य र चन्द्र परमात्मा र जीवात्माको बोधक हुन् । अतएव समाधियोगमा जब जीवन र शिव एकत्र अवस्थित हुन्छन् तब त्यो अद्वयानुभूतिको समय नै साधन-राज्यको अध्यात्मशास्त्रको अमावास्या हो । समष्टिभावले प्रकृतिमा जब यस एकात्मानुभूतिको लीला हुन्छ, त्यसबेला व्यष्टिभावले आफूभित्र यो लीलास्वादन सहज हुन जान्छ । तर एकान्त अभेदमा त उपासना हुनै सक्दैन, यसैले चतुर्दशीमा जीवन केही बढी मात्रामा शिवमा डुब्दछ तर थोरै भेदको रेखा शेष रहन्छ । त्यो शुभमुहूर्त नै जीवका लागि शिवोपासनाको, शिवपूजाको पुण्य लग्न हो । तत्पश्चात् अमावास्यामा जीवन जब शिवमा एकपटक डुब्दछ, भेदको लेश पनि रहँदैन, 'नेति-नेति'को साधनाबाट पूर्ण समाधिमा अद्वैतानुभूतिको चरमोत्कर्ष साधित हुन्छ। तब व्रतको पारण– पूर्णता सम्पन्न हुन्छ । त्यसैबेला 'इति इति'को साधनामा 'यत्र यत्र मनो याति ब्रह्मणस्तत्र दर्शनम्' यस प्रक्रियाको आरम्भ हुनाले नै शिवरात्रि-व्रतको अनुष्ठान सार्थक हुन्छ। जय गुरुदेव !

# तान्त्रोक्त शिव यन्त्र

भगवान् सदाशिवको नाम नसुन्ने व्यक्ति त को नै होला र ? हरेक व्यक्ति, धर्म, सम्प्रदाय आदिका परम आदरणीय देवका रूपमा पूज्य भगवान् सदाशिव सम्पूर्ण मानव, जीव-जगत्का पालक, रक्षक र संहारक हुनुहुन्छ । शिवको अर्थ कल्याण हो, शुभ हो, मङ्गल हो । भगवान् शिव ब्रह्मा, विष्णु, महेश्वर र सूर्यका समन्वितस्वरूप हुनुहुन्छ । सम्पूर्ण सृष्टिलाई चलायमान राख्न उहाँ ब्रह्मा, विष्णु, महेश्वरको त्रिगुणात्मक स्वरूपमा विराजमान हुनुहुन्छ। भगवान् सदाशिव अनादि,अनन्त,निर्गुणस्वरूप भएर पनि सबै गुणले युक्त हुनुहुन्छ । भगवान् शिवको आदि, मध्य र अन्त नभए पनि उहाँ सृष्टि चलायमान राख्नेवाला हुनुहुन्छ । भक्तको कष्टनिवारणका लागि प्रत्येक मन्वन्तरमा उहाँको प्रादुर्भाव हुने गर्दछ । शिवको शक्ति र यस शब्दभित्र लुकेर रहेका रहस्यमय सिद्धिहरूलाई एक सामान्य मानवले आफ्नो सम्पूर्ण जीवन खर्च गर्दा पनि बुझ्न जटिल हुन्छ । यस्ता देवाधिदेव भगवान् भोलेनाथको जति नै गुणगान गरे पनि कम नै हुन्छ ।

भगवान् सदाशिवको कृपा, आशीर्वाद प्राप्त गरी मानव जीवनमा आइपर्ने सम्पूर्ण समस्याहरूलाई समाधान गर्दै आफ्नो जीवनलाई पूर्णता दिन चाहने सम्पूर्ण गृहस्थ योगी, संन्यासीहरूले प्राप्त गर्नैपर्ने दिव्यतम यन्त्र हो– 'तान्त्रोक्त शिवयन्त्र' जुन सद्गुरुदेवहरूबाट प्राणश्चेतनायुक्त भई प्राप्त भएको होस् । आजको हरेक क्षण भय, त्रासका नयाँ-नयाँ स्वरूपहरूबाट पीडाले छटपटिएको मानवजीवनको लागि तान्त्रोक्त शिवयन्त्रले भरपर्दो सुरक्षा प्रदान गर्न सक्दछ ।

यो समस्त संसार नै विघ्न, बाधा, छल, कपट, हत्या, हिंसा, व्यभिचाररूपी विषको सागरमा डुबुल्की मारिरहेको छ। प्रत्येक पल चाहेर, नचाहेर पनि विषाक्ततामा तपाइँ हामी डुब्नै लागेका छौँ जसले गर्दा तपाइँ हामीबीचबाट उत्साह, उमङ्ग, जोश, जाँगरजस्ता सकारात्मक पक्षहरू लुप्त भएर गइरहेका छन् । चारैतिर अन्धकारबाहेक केही देखिँदैन । यस्तो भयावह अवस्थामा तान्त्रोक्त शिव यन्त्रले उक्त विषाक्त सागरमा डुब्नबाट जोगाउँदछ । नीलकण्ठस्वरूपमा भगवान् शिवले जसरी कालकूट विष पान गर्नुभएको थियो त्यसैगरी शिवयन्त्रले पनि तपाइँ, हाम्रो घर-परिवारमा रहेका कालकूट विषरूपी रोग, शोक, पाप, ताप, सन्ताप आदि विकार हरूलाई शमन गरेर हाम्रो जीवनलाई पूर्णता दिन सक्दछ ।

भगवान् सदाशिवका स्वरूप हजारौँ छन् । यी स्वरूपहरूमध्ये महामृत्युञ्जय स्वरूप पनि एउटा हो । भक्तको अकाल मृत्यु, रोग, चिन्ता आदि सङ्कटको मुक्तिप्रदाता शिव जीवनको पूर्णता दिनमा अग्रणी हुनुहुन्छ किनकि शिव भोग र मोक्ष दुवैका प्रदाता हुनुहुन्छ । भगवान् शङ्कर आशुतोष हुनुहुन्छ । जुन भक्तको जस्तो इच्छा छ, पूर्ण गर्नमा अग्रणी हुनुहुन्छ । यसैले त भगवान् सदाशिवलाई 'भागश्च मोक्षश्च करश्थ एव' भनेर सम्बोधन गरिन्छ ।

समग्रमा भन्नुपर्दा जसको घरमा झैझगडा भइरहने, परिवारका कुनै न कुनै सदस्यलाई तान्त्रिक बाधा भइरहने, अकाल मृत्युभयले सधैँ ग्रसित पारिरहने, दु:स्वप्नले सताइरहने, सम्पूर्ण तरीकाबाट मेहनत, परिश्रम गर्दा पनि सदैव असफल रहने, धनसम्पत्तिको सधैँ अभाव भइरहने, एकपछि अर्को रोगले सधैँ आक्रान्त पारिरहने, जप, तप, साधनामा सोचेजस्तो सफलता हात नलाग्ने आदि जीवनका अनेकौँ समस्याहरूबाट पीडित सम्पूर्णका लागि यस चैतन्य शिवयन्त्र रामवाण छ । त्यसैले यहाँहरूलाई अनुकूल भएको कुनै पनि क्षणमा यस यन्त्रलाई स्थापित गरेर नित्य आफूले जसरी सकिन्छ श्रद्धा, भक्ति समर्पण गरी प्रार्थना गरेको खण्डमा पक्कै पनि तपाइँको जीवनमा अनुकूलता आउनेछ ।

जय गुरुदेव !

# महाशिवरात्रि पूजन

## पूजनका लागि आवश्यक पर्ने सामग्रीहरू-

जल, केशरी, चंदन, अक्षता, फूलमाला, बेलपत्र, दूबो, पञ्चामृत (दूध, दही, मह, घ्यू, चिनी), यज्ञोपवीत, फलफूल, मिठाई, धूप, बत्ती, कपूर, पान, सुपारी, ल्वाङ, अलैँची, दक्षिणा, जलपात्र तथा अन्य पूजन सामग्री ।

**भगवान् शिवको पूजन शुद्ध आसनमा पूर्व वा उत्तरतिर फर्केर बस्नुपर्छ । आफ्नो सामानलाई सानो काठको चौकी (फल्याक) माथि सेतो कपडा ओछ्याएर राख्नुहोस् र परमपूज्य सद्गुरुदेवहरु र भगवान् शिवको फोटो स्थापित गरी ती दुवै फोटो अगाडि शिवलिंग स्थापना गर्नुहोस् । त्यसपछि धूप, दीप बाल्नुहोस् ।**

**आचमन**

दाहिने हातमा जल लिएर निम्न मन्त्र उच्चारणसँगै जल पिउनुहोस् ।

ॐ **केशवाय नमः॥ ॐ माधवाय नमः॥ ॐ नारायणाय नमः॥**

यसपछि हात धुनुहोस् ।

**पवित्रीकरण**

ॐ **अपवित्रः पवित्रो वा सर्वावस्थां गतोऽपि वा ।**
**यः स्मरेत् पुण्डरीकाक्षं स बाह्याभ्यान्तरः शुचिः ॥**

**संकल्प**

दाहिने हातमा जल लिनुहोस् । त्यसमा अक्षता, पुष्प आदि मिलाएर निम्न मन्त्र भन्दै संकल्प गर्नुहोस् ।

ॐ **विष्णुर्विष्णुः र्विष्णुः, अद्य** ... (आफ्नो नाम मनमनै भन्नुहोस्) **मम सर्वारिष्ट निरसनपूर्वकसर्वपापक्षयार्थ श्रीसाम्बसदाशिवप्रीत्यर्थं भगवतः श्रीसाम्बसदाशिवस्य पूजनमहं करिष्ये ॥**

जल भूमिमा वा अन्य कुनै पात्रमा छोडिदिनुहोस् ।

**गणेश स्मरण**

**गजाननं भूतगणादिसेवितं कपित्थजम्बूफलचारुभक्षणम् ।**
**उमासुतं शोकविनाशकारकं नमामि विघ्नेश्वरपादपंकजम् ॥**

**गुरू स्मरण**

**गुरुर्ब्रह्मा गुरुर्विष्णुः गुरुर्देवो महेश्वरः ।**
**गुरुः साक्षात् परब्रह्म तस्मै श्री गुरवे नमः ॥**

**भगवान् शिवको ध्यान**

**असित गिरिसमं स्यात् कज्जलं सिन्धुपात्रे,**
**सुरतरुवरशाखा लेखिनी पत्रमूर्वी ।**

**लिखति यदि गृहीत्वा शारदा सर्वकालं;**
**तदपि तव गुणनामीश पारं न याति ॥**

यसपछि भगवान् शिवलाई बेलपत्र चढाउनुहोस् ।

**आवाहन**- दाहिने हातमा अक्षता लिनुहोस् ।

**आवाहयामि देवेशमादिमध्यान्तवर्जितम्**
**आधारं सर्वलोकानामाश्रितार्थ प्रदायिनम् ॥**
ॐ **उमामहेश्वराभ्यां नमः आवाहनं समर्पयामि ।**

अक्षता अर्पण गर्नुहोस् ।

**आसन**- थालीमा फूल राख्नुहोस् ।

**विश्वात्मने नमस्तुभ्यं चिदम्बरनिवासिने ।**
**रत्नसिंहासनं चारु ददामि करुणानिधे ॥**
ॐ **उमामहेश्वराभ्यां नमः आसनार्थे पुष्पं समर्पयामि ॥**

**पाद्य**- दुई आचमनी जल चढाउनुहोस् ।

**नमः शर्वाय सोमाय सर्वमंगल हेतवे ।**
**तुभ्यं संप्रददे पाद्यं श्रीकैलास निवासिने ॥**
ॐ **उमाहेश्वराभ्यां नमः पादयोः पाद्यं समर्पयामि ।**

**अर्घ्य**- हातमा जल लिएर त्यसमा गन्ध, अक्षता, फूल मिलाएर अर्पण गर्नुहोस् ।

**अनर्घफलदात्रे च शास्त्रे वैवस्वतस्य च ।**

**तुभ्यमर्घ्य प्रदास्यामि द्वादशान्तनिवासिने ॥**
**ॐ उमामहेश्वराभ्यां नमः हस्तयोरर्घ्य समर्पयामि ॥**
**आचमन**- तीन आचमनी जल चढाउनुहोस् ।
**अशेषजगदाधार निराधार महेश्वर ।**
**ददाम्याचमनं तुभ्यं सुन्दरेश नमोऽस्तु ते ॥**
**ॐ उमामहेश्वराभ्यां नमः आचमनीयं जलं समर्पयामि ॥**
**स्नान**- जल एवं पञ्चामृतले स्नान गराउनुहोस् ।
**गंगाक्लिन्नजटाभार सोमसोमार्धशेखर ॥ नद्या मया समानीतैः स्नानं कुरु महेश्वर ॥ ॐ उमाहहेश्वराभ्यां नमः स्नानीयं जलं समर्पयामि ॥ स्नानान्ते आचमनीयं जलं समर्पयामि ॥ दुग्ध स्नानं समर्पयामि नमः ॥ दधि स्नानं समर्पयामि नमः ॥ घृत स्नानं समर्पयामि नमः ॥ मधु स्नानं समर्पयामि नमः ॥ शर्करा स्नानं समर्पयामि नमः॥ पंचामृत स्नानं समर्पयामि नमः ॥**
**शुद्धोदकस्नान**
**शुद्धं यत् सलिलं दिव्यं गंगाजलसमं स्मृतम् ।**
**समर्पितं मया भक्त्या शुद्धस्नानाय गृह्यताम् ।**
**श्रीसाम्बसदाशिवाय नमः । शुद्धोदकस्नानं समर्पयामि ॥**
शुद्धोदक स्नान गराएपश्चात् शिवलिंगलाई स्वच्छ वस्त्रले पुछेर अर्को थालीमा कुंकुम वा चन्दनले स्वस्तिक बनाएर शिवलिंगको स्थापना गर्नुहोस् ।
**वस्त्र**- रातो वस्त्र चढाउनुहोस् ।
**वस्त्रं समर्पयामि नमः॥ वस्त्रान्ते यज्ञोपवितं समर्पयामि नमः॥ आभूषणं समर्पयामि नमः॥ सुगंधितद्रव्यं समर्पयामि नमः॥**
**गन्ध**- चन्दन चढाउनुहोस् ।
**नमस्सुगन्धदेहाय ह्यवन्ध्यफल दायिने ॥**
**तुभ्यं गन्धान् प्रदास्यामि चान्धकासुरभंजन ॥**
**ॐ उमामहेश्वराभ्यां नमः गन्धं समर्पयामि ॥**
**अक्षता**- अक्षता चढाउनुहोस् ।
**अक्षतान् धवलान् देवसिद्धगन्धर्व पूजित ।**
**सुन्दरेश नमस्तुभ्यं गृहाण वरदो भव ।**
**ॐ उमामहेश्वराभ्यां नमः अक्षतान् समर्पयामि ॥**
**पुष्प**- फूल चढाउनुहोस ।
**तुरीयवनसंभूतं परमानन्दसौरभम् ।**
**पुष्पं गृहाण सोमेश पुष्पचापविभंजनं ।**
**ॐ उमामहेश्वराभ्यां नमः पुष्पाणि समर्पयामि ॥**
**बेलपत्र**
**ॐ उमामहेश्वराभ्यां नमः बिल्वपत्रं समर्पयामि ॥**
यसपछि दाहिने हातमा अबीरले रंगाएको अक्षता लिएर निम्न मन्त्र पढ्दै शिवलिंगमा चढाउनुहोस् ।
**ॐ भवाय नमः ॥ ॐ जगत्पित्रे नमः ॥ ॐ मृडाय नमः ॥ ॐ रुद्राय नमः ॥ ॐ कालान्तकाय नमः ॥ ॐ अघोराय नमः ॥ ॐ पशुपतये नमः ॥ ॐ शर्वाय नमः ॥ ॐ विरूपाक्षाय नमः ॥ ॐ त्र्यम्बकाय नमः ॥ ॐ शूलपाणये नमः ॥**
**ॐ उमामहेश्वराभ्यां नमः सौभाग्यद्रव्याणि समर्पयामि नमः ॥**
अबीर आदि चढाउनुहोस् ।
**धूप**- धूप बाली भगवान् शिवलाई अर्पण गर्नुहोस् ।
**ॐ उमामहेश्वराभ्यां नमः धूपं आघ्रापयामि ॥**
**दीप**- बलेको दीयोमा अक्षता चढाउनुहोस् ।
**ॐ उमामहेश्वराभ्यां नमः दीपं दर्शयामि ॥**
**नैवेद्य**- **ॐ उमामहेश्वराभ्यां नमः नैवेद्यं निवेदयामि नाना ऋतुफलानि च समर्पयामि ॥**
अब निम्न मन्त्र भन्दै पाँचपटक जल चढाउनुहोस् ।
**ॐ प्राणाय स्वाहा ॥ ॐ अपानाय स्वाहा ॥ ॐ व्यानाय स्वाहा ॥ ॐ उदानाय स्वाहा ॥ ॐ समानाय स्वाहा ॥**
**ताम्बूल**- **ॐ उमामहेश्वराभ्यां नमः मुखशुद्धचर्थं ताम्बूलं समर्पयामि ॥**
ल्वाङ, अलैंची मिलाएर पान अर्पण गर्नुहोस् ।
**दक्षिणा**- **ॐ उमामहेश्वराभ्यां नमः सांगता सिद्धचर्थं हिरण्यगर्भ दक्षिणां समर्पयामि ॥**
**मंत्र जप**-
**॥ ॐ शं शंभ्वोदभवाय शंकराय ॐ नमः ॥**
रुद्राक्ष वा स्फटिक मालाले यस मन्त्रको ११ माला जप गर्नुहोस् ।
**समर्पण**- यसपश्चात् निम्न मन्त्र पढ्दै भगवान् शिवलाई मन्त्र जप समर्पण गर्नुहोस् ।
**ॐ गुह्यातिगुह्य गोप्ता त्वं, गृहाणास्मत् कृतं जपम् ।**
**सिद्धि र्भवतु मे देव, त्वतप्रसादान् महेश्वरः ॥**
**नीराजन**
अब शुद्ध घिउको पाँच बत्ती बनाएर आरती गर्नुहोस् ।
**ॐ उमामहेश्वराभ्यां नमः नीराजनं समर्पयामि ॥**
**पुष्पाञ्जलि**
दुवै हातमा छोडाएको फूल लिएर निम्न मन्त्र भन्दै शिवलिंगमा चढाउनुहोस् ।
**हर विश्वाखिलाधार निराधार निराश्रय ॥**
**पुष्पांजलिं गृहाणेश सोमेश्वर नमोऽस्तु ते ॥**
**ॐ उमामहेश्वराभ्यां नमः मंत्र-पुष्पांजलिं समर्पयामि ॥**
**नमस्कार**- भगवान् शिवलाई प्रणाम गर्नुहोस् ।
**ॐ उमामहेश्वराभ्यां नमः नमस्करोमि ॥**
**अनेन कृत पूजाकर्मणा श्रीसंविदात्मकः साम्बसदाशिवः प्रियन्ताम् ॐ तत्सद् ब्रह्मार्पणमस्तु**
यसपछि प्रसाद वितरण गरी स्वयं पनि प्रसाद ग्रहण गर्नुहोस् ।
जय गुरुदेव !

# तब शिवजी प्रत्यक्ष हुनुभयो

गुरुदेव पूरै हिमालयलाई राम्ररी नियाल्न चाहनुहुन्थ्यो, जहाँ उहाँको मन रम्दथ्यो, त्यहाँ केही छिनका लागि रोकिनुहुन्थ्यो। हामी पन्ध्र बीस-शिष्य पूज्य गुरुदेवको साथमा कोसानीमा रोकिएका थियौँ । यो स्थान प्राकृतिकरूपमा हिमालयको सर्वश्रेष्ठ स्थान हो । यहाँबाट सूर्योदयको दृश्य यति सुन्दर र अद्वितीय देखिन्छ कि यसलाई शब्दमा वर्णनै गर्न सकिँदैन । प्रात:कालीन सूर्यको किरण जब चारैतिरको हिउँमा पर्दछ, यस्तो लाग्दछ कि विभिन्न रंगका गलैँचाहरू जमीनमा बिछ्याइएका छन् ।

त्यसबेला शिवरात्रि पर्व परेको थियो । हामी सबैले शिवरात्रिलाई राम्ररी मनाउने निश्चय गरेका थियौँ । राति हामी सबै शिष्यहरू कोसानीमा रहेको तपोवन आश्रममा गुरुदेवकै चरणमा बसेका थियौँ । अत्यधिक रमणीय यस आश्रममा केही वर्षपूर्व तपोवनी महाराज नामका एक स्वामी रहन्थे । जब उनले सुदूर हिमालयमा समाधि लिए तब यस आश्रममा उनका शिष्यहरू मात्र रहँदै आएका थिए । यस ठाउँमा विख्यात् योगीराज परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज आउनुभएको छ भन्ने थाहा पाएर हर्षित हुँदै उनीहरूले गुरुदेवको अभ्यर्थनामा ठूलो सहयोग गरे ।

राति हामीले शिव पूजनको तयारी गरी शिव पूजन सम्पन्न गरेर दूधको धाराबाट अभिषेक प्रारम्भ गऱ्यौँ तब गुरुदेवले भन्नुभयो– 'बिना तत्त्वमसी क्रिया रुद्राष्टाध्यायी पाठ व्यर्थ छ ।' उहाँले भन्नुभयो– 'भगवान् शिवलाई तब प्रसन्न पार्न सकिन्छ जब तत्त्वमसी पाठ र क्रिया सम्पन्न हुन्छ ।'

हामी सबैका लागि तत्त्वमसी पाठ, मन्त्र वा क्रिया नयाँ शब्द थिए । यसअघि यस तथ्यबाट परिचित थिएनौँ । हामीसँग यति धेरै समय पनि थिएन कि पूज्य गुरुदेवबाट यससम्बन्धी जानकारी लिऊँ । मैले गुरुदेवलाई निवेदन गरेँ– 'तत्त्वमसी क्रिया, तत्त्वमसी मन्त्र र तत्त्वमसी प्रयोग के र कस्तो प्रकारले सम्पन्न हुन्छ भन्ने बारेमा हजूरले अलिकति सम्झाउनु पऱ्यो ।'

उहाँले भन्नुभयो– 'म स्वयं तिमीहरूका साथ शिवार्चनमा संलग्न छु । यस प्रयोगलाई बुझाउनका लागि चार-छ घण्टा त लाग्छ नै र यसबेला सम्झाउनु पऱ्यो भने शिवरात्रिको पर्व बित्नेछ ।'

यो सुनेर हामी सबैको अनुहार हेर्नलायक भयो । हाम्रो विचारमा शिव पूजन र रुद्राष्टाध्यायी पाठ बेकार साबित भए किनकि तत्त्वमसी क्रियाबिना यी सबैको महत्त्व छैन । अर्को शिवरात्रि एक वर्षपछि मात्रै आउँछ, यो शिवरात्रि त व्यर्थ जाने भयो ।

गुरुदेवले हामी सबैको मनको कुरा थाहा पाएर भन्नुभयो– 'एउटा उपाय छ– हामीले महर्षि वशिष्ठलाई बोलाऔँ, उहाँले तत्त्वमसी क्रियायुक्त शिवार्चन सम्पन्न गराउनुहुनेछ ।'

यो हाम्रो लागि अर्को आश्चर्य थियो– के यस्तो सम्भव होला ? के वशिष्ठजस्ता ब्रह्मर्षि आएर पूरा विधि-विधानका साथ तत्त्वमसी क्रियायुक्त शिवार्चन सम्पन्न गराउनुहोला ? यदि यसो हुन्छ भने हामीभन्दा धेरै सौभाग्यशाली यस पृथ्वीमा अरू को होला ? वशिष्ठ त ब्रह्मपुत्र, सम्पूर्ण ऋषिहरूका गुरु एवं पुरोहित हुनुहुन्छ। शास्त्रका अनुसार शिवको पूर्णरूपमा पूजन गर्ने क्रिया उहाँलाई मात्र थाहा छ । शिवको पूजन सामान्य छैन बरु अत्यधिक जटिल र कठिन छ ।

हामी सबै बसिरहेका थियौँ । हाम्रो दायाँतर्फ बाघको छालामा पूज्य गुरुदेव श्री निखिलेश्वरानन्दजी प्रसन्नताका साथ शिव पूजनमा संलग्न हुनुहुन्थ्यो । बीचमा शिवलिङ्ग स्थापित गरिएको थियो र सबै पूजा सामग्री चारैतिर फैलिएका थिए ।

केही छिनपछि पूज्य गुरुदेवले वशिष्ठको ध्यान सम्पन्न गर्नुभयो । करिब पाँच-सात मिनेटमा गुरुदेवको सामु एक अत्यन्त तेजस्वी दिव्य महर्षि आकाश मार्गबाट ओर्लिरहनुभएको देखिनुभयो । उहाँको अनुहारमा सात्त्विकता र तेजस्विता अनुभव भइरहेको थियो । पुराणहरूमा वर्णित वशिष्ठ ऋषि साकाररूपमा हाम्रो सामु विद्यमान हुनुहुन्थ्यो । उहाँले पूर्ण क्षमताका साथ तत्त्वमसी क्रियायुक्त शिवार्चन सम्पन्न गराउनुभयो । करिब आठ घण्टासम्म उहाँले जसरी पूजन सम्पन्न गराउनुभयो, त्यो आफैमा अद्वितीय थियो । हामी सबैले पहिलोपटक तत्त्वमसी क्रियालाई अनुभव गऱ्यौँ,

पहिलोपटक यस ज्ञानलाई सिक्यौँ र पहिलोपटक त्यस विशिष्ट चिन्तनलाई हृदयस्थ गऱ्यौँ जुन शिव पूजनको अत्यधिक विशिष्ट क्रिया हो ।

जब चतुर्थ प्रहरमा शिवलिङ्गको ठाउँमा साक्षात् भगवान् शंकर बस्नुभएको देखियो तब हाम्रो प्रसन्नताको कुनै सीमा रहेन । लामो र फैलिएका जटा, जटाबाट प्रवाहित गंगा, गलामा सर्प र भष्मलेपन भएको दिव्य तेजस्वी शरीर... वस्तुतः अनुपम दृश्य थियो, अद्वितीय थियो, अलौकिक वातावरण थियो ।

भगवान् शंकरको प्रत्यक्ष प्रकटीकरणपछि कहिले र कुन विधिले आरती भयो, कहिले र कसरी प्रदक्षिणा भयो, मलाई केही पनि भान भएन, केही पनि होश रहेन । म त उहाँमा हराएको थिएँ, उहाँको रूप र तेजस्वितालाई पिइरहेको थिएँ ।

पूर्णाहुतिपछि भगवान् शिव अदृश्य हुनुभयो । त्यसका साथसाथै जसरी शून्य मार्गबाट वशिष्ठजी आउनुभएको थियो, त्यसरी नै शून्य मार्गबाट जानुभयो । भगवान् सूर्यको किरणले हामीलाई स्पर्श गरिरहेको थियो भने गुरुदेव निखिलेश्वरानन्दजी मुसुमुसु हाँसिरहनुभएको थियो । उहाँको अनुहारमा पूर्ण सन्तुष्टिको भाव थियो ।

वास्तवमा नै कोसानीको त्यो शिवरात्रि मेरा सञ्चित अनुभवहरूमध्ये सर्वश्रेष्ठ हो किनकि त्यसै रात मैले ब्रह्मर्षि वशिष्ठका अतिरिक्त भगवान् शंकरको पनि साक्षात् दर्शन गर्ने सौभाग्य पाएँ र तत्त्वमसी क्रियालाई पूर्णताका साथ बुझेँ । पछि-पछि पनि यसै क्रिया पद्धतिद्वारा मैले सबै देवीदेवताहरूको दर्शन पनि गरेँ जुन अगम्य र अगोचर मानिन्छ ।

हामी सबै शिष्य गुरुदेवको चरणमा निहुरियौँ । हामी कति सौभाग्यशाली छौँ कि यत्रो विराट् व्यक्तित्वका हामी शिष्य हौँ जसका लागि यो सबै सामान्य खेलजस्ता छन् । यति विशिष्ट क्रिया र अद्वितीय साधना उहाँका लागि सहज र सम्भव छ । जय गुरुदेव ।

# आयौँ शरणमा

जय गोरख बाबा ! जय निखिल बाबा !
आयौँ तिम्रो शरणमा, राखिदेऊ न चरणमा !!

गुरुर्ब्रह्मा गुरुर्विष्णुः गुरुर्देवो महेश्वरः !
असहाय बालक हामी, कृपा गर परमेश्वर !!

जय गोरख बाबा ! जय निखिल बाबा !
आयौँ तिम्रो शरणमा, राखिदेऊ न चरणमा !!

हाम्रा नाथ तिमी, हाम्रा आदिनाथ !
हाम्रा महायोगी तिमी, हाम्रा गोरखनाथ !!

जय गोरख बाबा ! जय निखिल बाबा !
आयौँ तिम्रो शरणमा, राखिदेऊ न चरणमा !!

हाम्रा स्वामी तिमी, हाम्रा सर्वेश्वर !
हाम्रा परमहंस तिमी, हाम्रा निखिलेश्वर !!

जय गोरख बाबा ! जय निखिल बाबा !
आयौँ तिम्रो शरणमा, राखिदेऊ न चरणमा !!

सम्हालीदेऊ यो जीवन, आयौँ शरणमा !
कोटिकोटि नमन, तिम्रो चरणमा !!

जय गोरख बाबा ! जय निखिल बाबा !
आयौँ तिम्रो शरणमा, राखिदेऊ न चरणमा !!

**–कौशलकुमार पौडेल, काठमाडौँ**
हाल : रुकुम

# सरस्वती सूक्तम्

सरस्वतीको तात्पर्य हो रसयुक्त हुनु, सारभूत हुनु । 'सार-स्व-अती' स्वलाई पूर्णतासम्म पुऱ्याउने क्रियालाई नै सरस्वती भनिन्छ । 'स-रस-स्व-अती' यसरी सन्धि विच्छेद गरिएको छ । यसैले तपाईं हामी जुन वीणाधारिणी सरस्वतीको कुरा गरिरहेका छौं, उहाँ वाग्देवी हुनुहुन्छ । मानिसहरूले वाग्देवीलाई सरस्वती भन्न थाले र सरस्वतीलाई पनि सरस्वती भन्न थाले । सरस्वतीको अर्थ हो जो लुप्त छ ।

त्रिवेणी जो हाम्रो जीवनमा संगमयुक्त बनोस्, आफ्नो आत्मालाई, आफ्नो रसलाई पूर्णतासम्म पुऱ्याउने क्रिया बनोस् जहाँ कुनै अधुरोपन नरहोस्, कुनै कुराको न्यूनता नै नरहोस्, त्यसैलाई नै सरस्वती साधना भनिन्छ । त्यसैलाई राजराजेश्वरी साधना भनिन्छ । त्यसैलाई जीवनको पूर्णताको साधना भनिएको छ ।

जीवनको संरचना तपाईंको उत्पत्ति हो तर त्यस संरचनामा विशुद्ध भाव जागृत गर्नुपर्दछ । दुर्बल, क्षीण र दरिद्र मानसिकतालाई समाप्त गर्ने शक्ति व्यक्ति अर्थात् साधकभित्रै निहित हुन्छ । जब व्यक्ति साधक बन्दछ तब ऊ आफ्नो जडतालाई समाप्त गरी चैतन्यताको बाटोमा अग्रसर हुन्छ । सरस्वती सरसता प्रदान गर्नुहुने देवी हुनुहुन्छ । यो त्यस शक्ति तत्त्वसँग संयोजित छ जसबाट जीवनमा सौन्दर्य, राग, संगीतको उत्पत्ति हुन सकोस्, जीवनमा शुष्कता समाप्त हुन सकोस्, जीवनलाई चिन्ने प्रक्रिया आरम्भ होस् । केवल धन प्राप्त गर्नुलाई मात्र जीवन नसम्झी धनलाई आफ्नो अधीनमा राखेर जीवनलाई नयाँ रूपबाट हेर्ने क्रिया केवल सरस्वतीको माध्यमबाट नै प्राप्त हुन सक्दछ ।

माघ महिनाको पञ्चमी शारदाम्बाको आविर्भाव दिवस मानिन्छ । यस दिन सरस्वतीको पूजा विशेषरूपले गरिन्छ । सरस्वती जयन्तीदेखि नै वसन्त ऋतु आरम्भ भएको मानिन्छ । जीवनमा नित्य नवीन दिन आओस् र प्रतिदिन भगवती शारदाको आराधना होस् ।

माता महासरस्वतीको यो दिव्यतम् सूक्त सम्पूर्ण मानवजातिको लागि वरदान सावित हुन सक्छ । हामीभित्र अन्तर्निहित ज्ञानग्रन्थीको निष्क्रियताले गर्दा हामीमा जुन किसिमको चेतनाको विकास हुनुपर्ने हो, त्यो हुन सकिरहेको छैन । यस सूक्तको माध्यमबाट त्यस ज्ञानग्रन्थीलाई जागृत गराउन सकिन्छ । त्यसैगरी हामीभित्रको चेतनशक्तिको अभावले नै हामीलाई मानसिक विचलनले सताइरहेको हुन्छ । यी सम्पूर्ण समस्याहरूलाई निराकरण गर्दै सिर्जनशीलता, कलात्मक प्रवृत्तिको विकास एवं विस्तारका साथै मस्तिष्कीय

चेतना एवं मानसिक स्वास्थ्यका लागि यो सूक्त अति नै आवश्यक र अनिवार्य छ–

**ॐ अविर्न मेषो नसि वीर्याय प्राणस्य पन्थाऽअमृतोग्रहाभ्याम् । सरस्वत्युपवाकैर्व्यानं नस्यानि बर्हिर्बदरैर्जजान ॥१॥ अङ्गान्यात्मन् भिषजा तदश्विनात्मानमङ्गैः समधात् सरस्वती । इन्द्रस्यरूप (गूं) शतमानमायुश्चन्द्रेण ज्योतिरमृतं दधानाः ॥२॥ सरस्वती योन्या गर्भमन्तरश्विश्यां पत्नी सुकृतं बिभर्ति । अपा(गूं)रसेन वरुणो न साम्नेन्द्र(गूं)श्रियै जनयन्नप्सु राजा ॥३॥ तेजः पशूना(गूं)हविरिन्द्रियावत् परिस्रुता पयसा सारघं मधु ॥ अश्विभ्यां दुग्धं भिषजा सरस्वत्या सुतासुताभ्याममृतःसोमऽइन्दुः ॥४॥ पावका नः सरस्वती वाजेभिर्वाजिनीवती ॥ यज्ञं वष्टु धियावसुः ॥५॥ चोदयित्री सूनृतानां चेतन्ती सुमतीनाम् ॥ यज्ञं दधे सरस्वती ॥६॥ महोअर्णः सरस्वती प्रचेतयति केतुना ॥ धियो विश्वा विराजति ॥७॥ प्रणो देवी सरस्वती वाजेभिर्वाजिनीवती ॥ धीनामवित्र्यवतु ॥८॥ त्वं देवी सरस्वत्यवा वाजेषु वाजिनि ॥ रदा पूषेव नः सनिम् ॥९॥ आपप्रुषी पार्थिवान्युरूरजो अन्तरिक्षम् ॥ सरस्वतीनिदस्पातु ॥१०॥ अम्बितमे नदी तमे देवीतमे सरस्वती ॥ अप्रशस्ता इव स्मसि प्रशस्ति मम्ब न स्कृधि ॥११॥**

**॥ इति सरस्वती सूक्तम् ॥**

# पर्दा हटाएर त हेर

परमपूज्य सद्‌गुरुदेवहरूको असीम कृपा एवं आशीर्वादले पूरै जीवनलाई एउटै चिन्तन, एउटै मनन र एउटै लक्ष्य बनाई गोरक्ष निखिल युग निर्माणार्थ लागिरहेका हामी गोरक्ष निखिल शिष्यहरू कति सौभाग्यशाली र कृपाशाली छौं भन्ने कुरा त बाहिरी संसार र आँखाले आँकलन गर्नै सकिन्न । सद्‌गुरुदेवहरूले गुरुकार्यको जिम्मा दिएर हामीलाई प्राणश्चेतना भरी यस धरामा जुन योजनाका लागि पठाउनुभएको छ, यस गुरु रहस्यलाई हामीले बुझी अगाडि बढ्ने समय आइसकेको छ । समय, परिस्थिति र चरम आधुनिकीकरणले समाज अस्तव्यस्त भइरहेको अवस्थामा, विभिन्न वाद र दर्शनहरू निष्क्रिय भइरहेको परिस्थितिमा यस धर्तीमा सद्‌गुरुदेवहरूको आशीर्वादस्वरूप गोरक्ष निखिल शक्ति क्रियाशील भइरहको छ । विश्वब्रह्माण्ड र पूरै समाजलाई गोरक्ष निखिल शक्तिले सिञ्चने समयक्रममा परिस्थितिले नयाँ मोड लिँदै गइरहेको आभास भइरहेको छ । छिट्टै नै गोरक्ष निखिलयुगीन समाज निर्माणार्थ देखिएका लक्षण र अनाप (अज्ञात नाथ पन्थ) शैलीको कार्य प्रणालीमा बसी सम्पूर्ण शिष्य-कार्यकर्ताहरूले एउटै गुरुमालामा आत्मविश्वासको धारालाई बहाई गुरुकार्य र तपस्यामा लीन हुनुपर्ने बेला भएको छ । तर बोलेर, लेखेर, पढेर मात्र कहाँ हुन्छ ? व्यवहारमा उतार्न नसकिरहेको अवस्थामा, गुरुगंगालाई आफूभित्र सजीवरूपमा बहाउन नसकिरहेको अवस्थामा, गुरुमार्गमा हिँड्दाहिँड्दै पनि कताकता बाधा, अड्चन र विविध समस्या आइरहेको अवस्थामा देखिएका दुविधा, शंका, दिक्दारी र आध्यात्मिक बन्धनहरूबाट कसरी मुक्ति पाउने होला ? सामान्यतया हाम्रो मानसपटलमा यस्ता प्रश्न र विचारहरूले डेरा जमाइराख्दछन्– कसरी सिद्धि, शक्ति प्राप्त गर्ने होला ? गुरुकार्यमा के कमी भइरहेको छ ? ध्यान, जपमा राम्ररी मनै लाग्दैन, किन ? ग्रेडिङ्गमा सधैं पछाडि किन ? यस्ता तर्क-तर्कना, विचार-भावना बारम्बार आएर हामीलाई सताइरहेको हुन्छ । यसमाथि कसैले थोरै पनि तल-माथि भनिदियो भने त अझ हाम्रो भाव नै बिग्रन्छ, क्रोध बढ्छ, अहंकार जन्मन्छ र काम, क्रोधले हामीभित्र डेरा जमाउँदछ । अब प्रश्न उठ्छ– केही त समाधान होला ? अवश्य, जहाँ समस्या त्यहाँ उपाय भने जस्तै हरेक कुराको प्रामाणिक समाधान हुन्छ । मात्र हामीले हृदयदेखि नै बुझ्ने कोशिश गर्नुपर्दछ ।

**गुरुः शिवो गुरुर्देवो**
**गुरुर्बन्धु ! शरीरिणाम् ।**
**गुरुरात्मा गुरुर्जीवो**
**गुरोरन्यन्न विद्यते ॥**

सम्पूर्ण शास्त्रको निचोड 'गुरुगीता'मा भनिएको छ– गुरु नै शिव हुनुहुन्छ, गुरु नै देवता हुनुहुन्छ, गुरु नै सम्पूर्ण प्राणीसँग सम्बन्धित हुनुहुन्छ, गुरु नै हरेक प्राणीको आत्मा हुनुहुन्छ भने उहाँ नै जीव हुनुहुन्छ । गुरुबाट छुट्टिएको वस्तु अन्य केही छैन । जसरी सुनबाट बनेका फरक-फरक गहना सुनबाट अलग छैन, जसरी माटोबाट बनेका हरेक वस्तु र कलाहरू माटोबाट अलग छैन, त्यसरी नै यो सम्पूर्ण सृष्टि गुरुमय छ किनकि सृष्टिको उत्पत्ति पनि गुरुत्वशक्तिबाट नै सम्भव भयो । अतः हामी पनि गुरुकै अंशरूप भयौं । खिया लागेको हतियारजस्तै हाम्रो आत्मामा गुरुतत्त्व विद्यमान छ तर त्यो शक्ति बाहिर आउन सकेको छैन, क्रियाशील हुन पाएको छैन, त्यसले आफ्नो मार्ग लिन पाएको छैन । त्यसमा खिया लागेको छ । जन्मजन्मको कुतर्क र कुसंस्कारले हाम्रो आत्मा दुषित छ, हाम्रो गलत विचार र भावनाले त्यसलाई यसरी जेलेर राखेको छ कि जसरी सिंहलाई पिँजडामा थुनेर राखेको छ । उसमा शक्ति छ तर त्यो बाहिर आउन सक्दैन । यसरी नै हामीभित्रको गुरुरूपी आत्मामा अथाह शक्ति भए पनि हाम्रै कारणले त्यो बन्धनमा छ । गुरुमार्गमा अगाडि बढ्दा क्रमशः जप, तप, ध्यान, योगहरूबाट ती विकार दोषहरू हराउँदै जान्छन् । हामीलाई त्यसको विकासक्रम थाहा नहुँदा मनमा अनेक शंका, उपशंका र तर्कबुद्धिले डेरा जमाउँछन्, यसबाट अझै अगाडि बढ्ने मार्गको ढोका बन्द हुन्छ । अनि यसै चक्रमा घुमिफिरी हामी अल्झिरहेका छौं । सर्वप्रथम हामीले आफैलाई नियालेर हेरौं । हामीभित्र गुरु हुनुहुन्छ, अरु केही छैन । आफूलाई चिनौं– यो भौतिक संसार र शरीर हाम्रो होइन, हामी त गुरुका प्रतिनिधि हौं । गुरुमार्गमा एकचित्त भएर लागेपछि एक न एक दिन हामीलाई गुरुदर्शन अवश्य हुन्छ । हामीमा कत्तिको विचलन छ, हामीलाई कस्तो छ भनेर हामीमा साना-ठूला गुरु-परीक्षाहरू भइरहन्छन् । त्यसलाई सकारात्मकरूपमा हेर्दै अगाडि बढ्नुपर्दछ ।

आजका मानिस भौतिकताको पछाडि दगुरिरहेका छन् । आधुनिकता र विज्ञानको नाममा व्यक्तिले आफैलाई बिर्सिसकेको अवस्था छ । वैज्ञानिकहरू नयाँ खोज र अन्वेषणमा छन् । कहिले चन्द्रमा त कहिले मङ्गल ग्रहको चर्चा हुन्छ । उनीहरू ब्रह्माण्डको खोजी गरिरहेका छन् ।

जसले आफ्नो खोज गरेको छैन उसले कसरी ब्रह्माण्ड नाप्न सक्ला ?

महान् वैज्ञानिक अल्वर्ट आइन्टाइनले अन्तिम अवस्थामा त पछुतो मान्दै भनेका थिए– मैले विज्ञानको लागि जे जति गरेँ त्यति अध्यात्मको लागि गरेको भए आउँदो सन्ततिलाई केही रहस्य दिन सक्थेँ होला, उनीहरू खोज्दाखोज्दै आफ्नो जीवन बिताइरहेका छन् । सारा ब्रह्माण्ड त हामीभित्रै छ, सारा विचार र सृजना त गुरुतत्त्वभित्रै छ । मानिस जे गर्छ आनन्द, खुशी र सुखको लागि गरिरहेको छ । तर उसका एक-एक प्रयासभित्र दुःख, चिन्ता तथा बरवादीको झल्को छ । आनन्द र सुखको भण्डार त हामीभित्रै छ । वैज्ञानिकहरू आफै भन्छन्– मानव शरीरमा पाइने DNA भित्र त्यस्ता सबै तत्त्वहरू छन् जुन यस संसारमा व्याप्त छन् । DNA लाई त माइक्रोसकोपले निरीक्षण गर्लान् तर DNA लाई चलाउने त्यो गुरुत्वशक्तिको बारेमा उनीहरू कसरी अनुसन्धान गर्लान् ? यो त उनीहरू देख्दैनन् । गुरुसत्तालाई पाउन आत्मारूपी माइक्रोसकोपले हेर्ने प्रयास गर्नुछ ।

**बहु जन्म कृतात् पापात्**
**अयमर्थो न रोचते ।**
**जन्म वन्धनिवृत्यर्थं**
**गुरुमेव भजेत्सदा ॥**

अनेकौँ जन्मका पाप, दोषका कारण गुरुमार्गमा अवरोध र अरुचि लाग्दछ । त्यसैले जन्म, बन्धनबाट मुक्तिको लागि सदैव गुरुनामको रस पिउनुपर्दछ अथवा गुरुनाम जप्नुपर्दछ । जसरी पित्तादिजनित रोगका कारण स्वादिष्ट भोजन पनि तीतो लाग्दछ, त्यसरी नै पापजनित दुष्कर्मको परिणामस्वरूप गुरुसँग सम्बन्धित दिव्य चेतनामय ज्ञान त्यस्ता साधकलाई अनुकूल प्रतीत हुँदैनन् । यस्तो स्थितिमा गुरुनामको याद गर्नुपर्दछ र ध्यान, जप, तथा गुरु प्राप्तिको मार्गमा लागि पर्नुपर्दछ । अतः यस्ता बाधाहरूलाई पन्छाउन सद्गुरुदेव भन्नुहुन्छ– 'मेरो मार्गमा हिँडेर त हेर, तिम्रा सबै मार्ग नखोले त भन्नु । मतिर मन लगाएर त हेर, तिम्रो ध्यान नराखे त भन्नु ।'

यसरी जिम्मा लिनुभएको छ सद्गुरुदेवले हाम्रो । एउटा वाचा गर्नुभएको छ उहाँले । त्यसैले उहाँलाई सच्चा मनले जपौँ, उहाँको मार्गमा लागौँ । यो जीवन गुरुको लागि हो, हाम्रो चिन्ता उहाँको हातमा सुम्पिदिऔँ । सद्गुरुदेव सदैव भन्नुहुन्छ– 'अवरोधको त्यो कालो पर्दा हटाएर त हेर, म तिम्रै हृदयमा त छु । मसँग एकाकार भएर त हेर, तिमीलाई ब्रह्म बनाइँन भने भन्नु ।'

हाम्रो हृदयलाई अवरोधका काला तुच्छ पर्दाले घेरेर राखेको छ, आत्मारूपी गुरु मन्दिरलाई काम, क्रोध, मोह, अहंकार, लोभ, पापजस्ता दुर्गुणहरूले दुषित बनाएका छन् । यिनै शारीरिक र भौतिक मोहभन्दा माथि उठेर त्यो राक्षसी पर्दा हटाएर त हेरौँ । बल्ल गुरु मन्दिर हाम्रो हृदयमा देख्नेछौँ, हाम्रै आत्मामा गुरु पादुका स्थापित भएको देख्नेछौँ । आफ्नो तन, मनमा गुरु चिन्तनलाई बढावा दिऔँ । क्रोध, अहंकारलाई पस्न नदिऔँ । यसो गर्दा गुरु चेतना हाम्रो हृदयमा खुल्दै जानेछ, गुरुकार्य, जप, तपमा स्वतः नै मन लाग्नेछ । गुरुलाई हृदयमा स्थापना नगरेसम्म हजारौँ जप, ध्यान पनि निष्क्रिय हुन्छ । जति यज्ञ, यज्ञादि र तीर्थ धाए पनि मन दुषित छ, आत्मा दुषित छ भने त्यो प्राप्त हुन मुश्किल पर्दछ । गुरुसमान कुनै देवता छैनन्, कुनै स्वामी छैनन्, न कुनै पद छ । केवल गुरुनाम नै सर्वोच्च छ । जब साधक गुरु गंगामा नुहाउँछ, हरपल गुरुको याद गर्दछ, गुरु समर्पणको भाव बनाइराख्दछ, त्यस्ता साधकको लागि गुरुबाहेक संसारका सबै चिज गौण लाग्दछन् । देवीदेवता पनि उसलाई इर्ष्या गर्न थाल्दछन् । अतः गोरक्ष निखिल युगको महान् योजनामा लागेका हामी कार्यकर्ता, साधक-साधिकाहरूको एउटै लक्ष र कर्म हो– गुरु प्राप्ति र गुरु स्वरूपको ध्यानमा एकाकार हुनु । जब हामीभित्रको विकार हटेर जान्छ तब स्वतः नै गुरुशक्ति हाम्रो हृदयमा स्थापित हुन्छ । आवश्यक छ– समर्पणको, धीरताको ।

एउटा उदाहरणबाट यसलाई बुझौँ– जसरी बिजुलीको चिमले प्रकाश फाल्दछ, त्यसरी नै हरेक शिष्यमा गुरुत्वको प्रकाश हुन्छ । विजुली उत्पादन गर्न एकैपटक सम्भव छैन । खोला चाहियो, त्यसलाई बाँध बनाउनु पर्‍यो, इलेक्ट्रिक मोटर घुमाउनु पर्‍यो, यसका लागि त्यस बाँधको जललाई अति प्रवाहका साथ प्रवाहित गर्नुपर्‍यो । मोटर घुमेपछि पनि सम्बन्धित ठाउँमा उपकरण र तारहरूबाट चिमसँग त्यो शक्तिको स्रोत पुर्‍याउनुपर्दछ । जब बाँध बन्द गरिन्छ तब बिजुली बल्दैन । यो उदाहरणलाई हामीभित्रको अन्धकारमय पर्दासँग तुलना गर्न सकिन्छ । जब बाँध खोलिन्छ र पर्दा हटाएर हेरिन्छ तब शक्तिको गतिशीलतामा चिमले प्रकाश फाले जस्तै हरेक शिष्यले समाजलाई एउटा चेतना प्रदान गर्दछन् । अनि गोरक्ष निखिल युग एक विशाल जलविद्युत् परियोजना हुनेछ भने सारा संसार र समाजमा गोरक्ष निखिल शिष्यहरू उदाउनेछन् र उनीहरूले गोरक्ष निखिल ज्योति र प्रकाशको प्रचार गर्दछन् । अनि सद्गुरुदेवहरूले हरेक आत्माको कल्याण गर्नुहुनेछ । जय गुरुदेव !

# मनमानेश्वरी मन्दिरभित्रको

# मानेश्वर महादेव

मानेश्वर राजाङ्गण मध्येन द्वारेण उत्तर गत्वा प्रषद्धमानेश्वर ।

लिच्छविकालीन शक्तिशाली राजा मानदेवकालको हाडीगाउँ गहनापोखरीनजिक मनमानेश्वरी मन्दिरभित्र भैरवरूपी मानेश्वर महादेवको शिवलिङ्ग दर्शनीय छ । यस मन्दिर मानदेवकालीन राजदरवारको दक्षिण सीमामा थियो । उक्त मन्दिरको पश्चिमतर्फ तत्कालीन अवस्थामा मानसरोवर नामको तलाउ थियो जुन सातवटा इनारको पानीबाट भरिएको भनिन्थ्यो । यस इनारबाट ल्याइएको पानीद्वारा देवीदेवताहरूलाई स्नान गराइन्थ्यो । डा. यज्ञनाथ आचार्यका अनुसार ३०, ३५ वर्ष अघिसम्म मन्दिरको चारैतिर तलाउ देखिन्थे । पश्चिमतर्फको तलाउ मानविहार, पूर्वतर्फको तलाउ लामोपोखरी, दक्षिणतर्फको तलाउ बालमन्दिर बनाउँदा पुरिएको थियो भने उत्तरतर्फको तलाउ वर्तमानमा गहनापोखरीको रूपमा अवस्थित छ । तत्कालीन राजाहरूले नित्य पूजा गर्दा 'नर स्वाँ' (एकप्रकारको फूल) चढाउने गर्दथे जुन फूल नचढाइकन अन्य फूलहरू चढाइन्नथ्यो भन्ने भनाई पाइन्छ । हाँडीगाउँलाई नेवारी भाषामा 'नर' भनिन्छ ।

राजा अंशुवर्माको पालाको हाँडीगाउँको डबलीको सम्वत् ३० (ई. ६०६) को अभिलेखमा 'श्री दैव्या:' र 'श्री कुलदेवस्य:' भनी सबैभन्दा पहिले देवीलाई भाग छुट्याइएको छ । यस अभिलेखमा इष्टदेवता सरह नै कुलदेवतालाई भाग छुट्याएको छ । यिनी तत्कालीन लिच्छविकालीन राजाहरूका कुलदेवता रहेको बुझिन्छ । कुलदेवताको अगाडि राजोचित 'श्री' लागेको पाइन्छ । यसबाट राजदरवारभित्रका कुलदेवता मनमानेश्वरी हुन् भन्ने बुझ्न सकिन्छ ।

डबलीकै सम्वत् ३२ (ई. ६०८) को अभिलेखले त्यस समय नेपालका प्रख्यात् मन्दिरहरूमध्ये एक मानिएको मानेश्वरको खर्चबारे व्यवस्था गर्दै 'भवताङ, गृहक्षेत्रादि श्रावणिका दान भरियम्मर्यादा बन्ध: यत्र मानेश्वरस्य' भनेबाट मन्दिरको लागि प्रशस्त आम्दानीको स्रोतको व्यवस्था समेत भएको बुझिन्छ ।

राजा अर्जुनदेवले आफूलाई 'श्री मानेश्वरको वर प्रसादरुपी अमृतले परिपूर्ण शरीर भएको' भनी उल्लेख गरेका छन् । यक्ष मल्लले यिनलाई नेपालका प्राचीन इष्टदेवी मानेको पाइन्छ । यसरी नै काठमाडौँ, भक्तपुर, ललितपुरका राजाहरुले मनमानेश्वरीको आशीर्वाद प्राप्तिका लागि धार्मिक अनुष्ठानहरु गरेको पाइन्छ । पृथ्वीनारायण शाह, गीर्वाणयुद्ध विक्रम शाह, सुरेन्द्र शाहको राज्यकालमा समेत लिच्छवि र मल्ल राजाका कुलदेवी, इष्टदेवीको पर्व पूजा, नित्य पूजा गर्न जग्गा छुट्याई राजगुठीमार्फत पूजा-आराधना हुने गरिएको थियो ।

कुनै बेला श्री पशुपतिनाथमा समेत पञ्चमकार पूजा हुन्थ्यो । यहाँ बलिको भोगसहित पूजा हुने गर्दथ्यो भनेर इतिहासविद्हरूको दावी छ । मनमानेश्वरी मन्दिरभित्र रहेको मानेश्वर शिवलिङ्गको पूजा कर्माचार्यहरूबाट हुने गर्दछ । मानेश्वर शिवलिङ्गलाई भैरव स्वरूपमा बलिको भोग दिई पूजा-आराधना गर्ने गरिन्छ । शिवलिङ्गलाई भोग दिइसकेपछि चारजना पुरोहित कर्माचार्यले बलि दिइएको जन्तुको मासुका टुक्राहरू यज्ञमा आहुति दिएपश्चात् मात्र देवी मनमानेश्वरीको पूजा हुने गर्दछ ।

राजा जयस्थिति मल्लले मानेश्वरलाई मानेश्वरी, फर्पिङ्गको झोण्टेश्वरलाई झोण्टेश्वरी र नुवाकोटको भैरवलाई नुवाकोटको भैरवीमा परिणत गरेका थिए भने इटुम्बहालस्थित वि.सं. १४३९ को जयसिंहरामवर्द्धनको अभिलेखमा श्रीमानेश्वरको वर पाएको भनी उल्लेख छ ।

राजा जयदेवको कालमा नै मानेश्वर मन्दिरको नामबाट ग्रामको नाम समेत मानेश्वर ग्राम प्रख्यात् भइसकेको थियो । राजा नरेन्द्रदेवको यङ्गालहिटीको शिलालेखमा 'मानेश्वर ग्राम' भनेर स्पष्ट उल्लेख भएबाट मानेश्वर ग्राम तत्कालीन समयमा धेरै प्रतिष्ठित रहेको बुझिन्छ ।

राजा अर्जुनदेवले आफूलाई 'श्री मानेश्वरको वर प्रसादरूपी अमृतले परिपूर्ण शरीर भएको' भनी उल्लेख गरेका छन् । यक्ष मल्लले यिनलाई नेपालका प्राचीन इष्टदेवी मानेको पाइन्छ । यसरी नै काठमाडौँ, भक्तपुर, ललितपुरका राजाहरूले मनमानेश्वरीको आशीर्वाद प्राप्तिका लागि धार्मिक अनुष्ठानहरू गरेको पाइन्छ । पृथ्वीनारायण शाह, गीर्वाणयुद्ध विक्रम शाह, सुरेन्द्र शाहको राज्यकालमा समेत लिच्छवि र मल्ल राजाका कुलदेवी, इष्टदेवीको पर्व पूजा, नित्य पूजा गर्न जग्गा छुट्याई राजगुठीमार्फत पूजा-आराधना हुने गरिएको थियो ।

वि.सं. १७६९ को इटुम्बहालभित्रको शिलालेखअनुसार राजा भाष्कर मल्लले मनमानेश्वरीको कृपाले सर्वत्र कीर्ति फैलिएको भनी तारावन महाविहारमा चाँदीको मूर्ति बनाई प्रतिष्ठापित गर्नुका साथै काठमाडौँ ओमबहालको चैत्य जीर्णोद्धार गरेका थिए । राजा जगज्जय मल्लले वि.सं. १७९० मा हनुमान ढोकाभित्र तलेजु मन्दिरको तल दक्षिणतर्फ राखेको शिलास्तम्भमा मनमानेश्वरी देवीलाई 'वरलब्ध प्रसाद देवीस्यमानमानोन्हात' भनेका छन् भने जयप्रकाश मल्लले नन्दराज जैशीलाई ताम्रपत्र गरी जग्गा दिँदा 'श्रीमनमानेश्वरीष्ट देवता वरलब्ध' भनी उल्लेख गरेका छन् । योगप्रकाश मल्लको मृत्युपछि गद्दीमा बसेका विष्णु मल्लको गोत्रोचारसम्बन्धी पत्रमा 'श्रीमानेश्वरीष्ट देवता' भनी उल्लेख गरेको पाइन्छ ।

मनको इच्छा पूरा गर्ने मनमानेश्वरीको दर्शनपछि गोरखाको मनकामना र काठमाडौँको बालाजुमा रहेको मनमैजुको दर्शन गर्नुपर्दछ भन्ने जनश्रुति पाइन्छ । यसपछि मात्र पुण्य मिल्ने कुरा जनमानसमा व्याप्त छ ।

जय गुरुदेव !

# गुरु गीता

आत्मीय पाठकवर्ग, गुरुको महिमा र महत्त्वको बारेमा शास्त्रले उल्लेख गरेका विषयहरूलाई जनसमक्ष उजागर गर्दै गुरूप्रतिको सच्चा भाव र भक्ति जागृत गर्ने उद्देश्यले यस स्तम्भअन्तर्गत अर्थसहित प्रकाशित गर्दै आइरहेका छौँ ।

**एकाक्षर प्रदातारं**
**गुरुं नैव च मन्यते ।**
**श्वान योनिशतं गत्वा**
**चाण्डालेष्वपि जायते ॥२०७॥**

भावार्थ : एक अक्षर पनि ज्ञान दिनुहुने गुरुको जसले सम्मान गर्दैन, यस्तो प्राणी सयौँ श्वान (ककुर) योनिमा अल्मलिँदै दुर्भाग्यवश चण्डालको घरमा उत्पन्न हुन्छ । शास्त्र मर्यादानुसार सधैँ गुरुको सम्मान गर्नुपर्छ किनकि हाम्रो जीवनमा ज्ञानका माध्यमले कुनै न कुनै पक्षमा गुरु सहायक हुनुहुन्छ । गुरुको अपमान सधैँ नै हानिकारक मानिएको छ। लोक व्यवहारमा मर्यादानुसार गुरुको सम्मान गर्दै आएका छौँ ।

**संसारसागर समुद्धरणैकमंत्रं**
**ब्रह्मादिदेवमुनिपूजितसिद्धमंत्रम् ।**
**दारिद्रयदुःखभवरोगविनाशमन्त्रं**
**वन्दे महाभयहरं गुरुराजमंत्रम् ॥२०८॥**

भावार्थ : 'गुरुमन्त्र' मन्त्रहरूको राजा हो । यो संसाररूपी सागर तर्नलाई अद्वितीय साधन हो, यो ब्रह्मादि देवताहरू तथा वशिष्ठादि मुनिहरूले सम्मानित सिद्धमन्त्र हो, यो दरिद्रता, दुःख, संसार रोगलाई नष्ट गर्ने मूलमन्त्र हो । यस्तो जन्म-मृत्युका भयलाई टाढा गर्ने मन्त्रराजलाई नमस्कार छ । मन्त्रका अक्षर केवल अक्षर मात्र होइनन्, त्यसमा दिव्यशक्ति समाहित हुन्छन्। गुरुमन्त्र आफ्नो चेतना र दिव्यताका कारण नै शिष्यहरूलाई प्रिय लाग्छ ।

**सप्तकोटि महामंत्रा**
**श्चित्तविभ्रम कारकाः ।**
**एक एव महामंत्रो**
**गुरुरित्यक्षर द्वयम् ॥२०९॥**

भावार्थ : मन्त्रहरूको सङ्ख्या शास्त्रमा सात करोड भनिएको छ । कुनै पनि वस्तु अथवा ज्ञान धेरै भयो भने मनमा शंका उत्पन्न हुन थाल्छ । यतिका मन्त्र देखेर साधकहरू भ्रममा पर्नु स्वाभाविक नै हो । शिष्यको चित्त कुनै भ्रममा नपरोस् भनेर नै गुरुमन्त्रको सृजना भएको हो जसले गर्दा साधकले गुरु मन्त्रलाई अत्यन्त सुगमताका साथ अपनाउन सक्दछ र आफ्नो जीवनलाई पूर्णतातर्फ अग्रसर गराउन सक्दछ ।

**यस्य प्रसादादहमेव सर्वं**
**मय्येव सर्वं परिकल्पितं च ।**
**इत्थं विजानामि सदात्मरुपं**
**तस्यांघ्रिपद्मं प्रणतोऽस्मि नित्यम् ॥२१०॥**

भावार्थ : जुन गुरुको कृपाले 'यो समस्त दृश्यमान जगत् म हुँ' यस्तो ज्ञान प्रतीत हुन्छ र 'यो समस्त विश्व ममा समाहित छ' भन्ने परम ज्ञानलाई शिष्यका हृदयमा उतार्ने नित्य शुद्ध-बुद्धस्वरूप त्यस पावनतम गुरुका श्रीचरणमा अत्यन्त भावपूर्ण हृदयदेखि हाम्रो नमस्कार । अज्ञानको अवस्थामा यस संसारलाई बुझ्न ज्यादै गाह्रो हुन्छ। जुनबेला साधकको मन विचलित हुन्छ त्यतिबेला यो संसार दुःखमय प्रतीत हुन्छ। तसर्थ, यस भ्रमको अवस्थालाई हटाउनु गुरुको कार्य हो ।

**अज्ञान तिमिरान्धस्य**
**विषयाक्रान्त चेतसः ।**
**ज्ञान प्रभाप्रदानेन**
**प्रसादं कुरु मे प्रभो ॥२११॥**

भावार्थ :हे गुरुदेव ! अज्ञानरूपी अँध्यारोले ढाकिएका, विषय-वासनाहरूले आक्रान्त चित्त भएका आफ्ना साधकलाई ज्ञानरूपी प्रकाशको अनुदान दिएर आफ्नो अनुग्रह प्रदान गर्नुहोस् । यो निश्चित छ कि ब्रह्मा, विष्णु र शिव पनि गुरुकृपाका आकांक्षी हुनुहुन्छ किनकि गुरुकृपा नपाएसम्म मनले बन्धनहरूबाट आराम पाउन कहिले सम्भव हुनै सक्दैन। तसर्थ, सर्वप्रथम निश्छल सेवाको माध्यमले गुरुलाई प्रसन्न गर्ने प्रयास गर्नुपर्छ ।

**गुरु त्यागाद् भवेन्मृत्यु**
**र्मन्त्र त्यागाद् दरिद्रता ।**
**गुरु मंत्रपरित्यागी**
**रौरवं नरकं व्रजेत् ॥२१२॥**

भावार्थ : गुरु स्वार्थरहित भएर शिष्यको जीवनमा आउनुहुन्छ, शिष्यलाई दुःखबाट पार लगाउनमा उहाँको कुनै स्वार्थ हुँदैन। त्यसैले, गुरुको महत्ता सर्वाधिक छ। त्यस दिव्यज्ञानलाई, त्यस चेतनालाई प्राप्त गरिसकेपछि गुरुलाई छोड्नु हुँदैन । गुरुको त्याग गर्नाले मृत्यु हुन्छ अर्थात् जीव मृत्युसमान दुःखहरूबाट घेरिन्छ र गुरुमन्त्रको त्यागले दरिद्रता प्राप्त हुन्छ। गुरु र मन्त्र दुवैको त्याग गर्नेको रौरव नरकमा वास हुन्छ। जय गुरुदेव !

# सदाशिवका अनेक स्वरूप

**भगवान् सदाशिव**

यो धत्ते भुवनानि सप्त गुणवान् स्रष्टा रज:संश्रय:
संहर्ता तमसान्वितो गुणवतीं मायामतीत्य स्थित: ।
सत्यानन्दमनन्तबोधममलं ब्रह्मादिसंज्ञास्पदं
नित्यं सत्त्वसमन्वयादधिगतं पूर्णं शिवं धीमहि ॥

जो रजोगुणको आश्रय लिएर संसारको सृष्टि गर्नुहुन्छ, सत्त्वगुणले युक्त भएर सातै भुवनको धारण-पोषण गर्नुहुन्छ, तमोगुणले युक्त भएर सबैको संहार गर्नुहुन्छ तथा त्रिगुणमयी मायालाई नाघेर आफ्नो शुद्धस्वरूपमा स्थित हुनुहुन्छ, त्यस सत्यानन्दस्वरूप, अनन्त बोधमय, निर्मल एवं पूर्णब्रह्म शिवको हामी ध्यान गर्दछौँ । उहाँ नै सृष्टिकालमा ब्रह्मा, पालनको समयमा विष्णु र संहारकालमा रुद्र नाम धारण गर्नुहुन्छ तथा सदैव सात्त्विकभावलाई अपनाउनाले नै प्राप्त हुन्छ ।

**परमात्मप्रभु शिव**

वेदान्तेषु यमाहुरेकपुरुषं व्याप्य स्थितं रोदसी
यस्मिन्नीश्वर इत्यनन्यविषय: शब्दो यथार्थाक्षर: ।
अन्तर्यश्च मुमुक्षभिर्नियमितप्राणादिभिर्मृग्यते
स स्थाणु: स्थिरभक्तियोगसुलभो नि:श्रेयसामास्तु व: ॥

वेदान्तग्रन्थमा जसलाई एकमात्र परम पुरुष परमात्मा भनिएको छ, जसले समस्त द्यावा-पृथिवीलाई अन्तर्बाह्य सर्वत्र व्याप्त गरेर राख्नुभएको छ, जुन एकमात्र महादेवका लागि 'ईश्वर' शब्द अक्षरश: यथार्थरूपमा प्रयुक्त हुन्छ र जो अरुको विशेषणको विषय बन्दैन, आफ्नो अन्तर्हृदयमा समस्त प्राणहरूलाई निरुद्ध गरेर मोक्षको इच्छा गर्ने योगीजन जसको निरन्तर चिन्तन र अन्वेषण गर्दै रहन्छ, उहाँ नित्य एकसमान सुस्थिर रहने, महाप्रलयमा पनि विक्रियालाई प्राप्त नहुने र भक्तियोगबाट शीघ्र प्रसन्न हुने भगवान् शिवले सबैको परम कल्याण गर्नुहोस् ।

**मङ्गलस्वरुप भगवान् शिव**

कृपाललितवीक्षणं स्मितमनोज्ञवक्त्राम्बुजं
शशाङ्ककलयोज्ज्वलं शमितघोरतापत्रयम् ।
करोतु किमपि स्फुरत्परमसौख्यसच्चिद्वपुर्धराधरसुताभुजोद्वलयितं महो मङ्गलम् ॥

जसको कृपापूर्ण चितवन अति नै सुन्दर छ, जसको मुखारविन्द मन्द मुस्कुराहटले अत्यन्तै मनोहर देखिन्छ, जो चन्द्रमाको कलाले परम उज्ज्वल हुनुहुन्छ, जो आध्यात्मिक आदि तीनै तापहरूलाई शान्त गर्नमा समर्थ हुनुहुन्छ, जसको स्वरूप सच्चिन्मय एवं परमानन्दरूपले प्रकाशित हुन्छ तथा जो गिरिराजनन्दिनी पार्वतीको भुजपाशले आवेष्टित हुनुहुन्छ, उहाँ शिवनामक कुनै अनिर्वचनीय तेजपुञ्जद्वारा सबैको मङ्गल होस् ।

**भगवान् अर्धनारीश्वर**

नीलप्रवालरुचिरं विलसत्त्रिनेत्रं
पाशारुणोत्पलकपालत्रिशूलहस्तम् ।
अर्धाम्बिकेशमनिशं प्रविभक्तभूषं
बालेन्दुबद्धमुकुटं प्रणामामि रूपम् ।

श्रीशंकरजीको शरीर नीलमणि र प्रवालसमान सुन्दर (नीललोहित) छ, तीन नेत्र छन्, चार हातमा पाश, रक्तकमल, कपाल र शूल छन्, आधा अङ्गमा अम्बिकाजी र आधामा महादेवजी हुनुहुन्छ । दुवै अलग-अलग शृङ्गारले सज्जित हुनुहुन्छ, निधारमा अर्धचन्द्र छ र मस्तकमा मुकुट सुशोभित छ, यस्तो स्वरूपलाई नमस्कार छ ।

यो धत्ते निजमाययैव भुवनाकारं विकारोज्झितो
यस्याहु: करुणाकटाक्षविभवौ स्वर्गापवर्गाभिधौ । प्रत्यग्बोधसुखाद्वयं हृदि सदा पश्यन्ति यं योगिनस्तस्मै शैलसुताञ्चितार्धवपुषे

शश्वन्नमस्तेजसे ॥

जो निर्विकार भएर पनि आफ्नो मायाबाट विराट् विश्वको आकार धारणा गर्नुहुन्छ, स्वर्ग र अपवर्ग (मोक्ष) जसको कृपाकटाक्षको नै वैभव मानिन्छ तथा योगीजन जसलाई आफ्नो हृदयभित्र अद्वितीय आत्मज्ञानानन्दस्वरूपमा नै देख्दछन्, त्यस तेजोमय भगवान् शंकर, जसको आधा शरीर शैलराजकुमारी पार्वतीद्वारा सुशोभित छ, लाई निरन्तर मेरो नमस्कार छ ।

**भगवान् शंकर**

वन्दे वन्दनतुष्टमानसमतिप्रेमप्रियं प्रेमदं
पूर्णं पूर्णकरं प्रपूर्णनिखिलैश्वर्यैकवासं शिवम् ।
सत्यं सत्यमयं त्रिसत्यविभवं सत्यप्रियं सत्यदं
विष्णुब्रह्मनुतं स्वकीयकृपयोपात्ताकृतिं शंकरम् ॥

वन्दना गर्नाले जसको मन प्रसन्न हुन जान्छ, जसलाई प्रेम अत्यन्तै प्रिय छ, जो प्रेम प्रदान गर्नुहुने, पूर्णानन्दमय, भक्तहरूको अभिलाषा पूर्ण गर्नुहुने, सम्पूर्ण ऐश्वर्यका एकमात्र आवासस्थान र कल्याणस्वरूप हुनुहुन्छ, सत्य जसको विग्रह हो, जो सत्यमय हुनुहुन्छ, जसको ऐश्वर्य त्रिकालाबाधित छ, जो सत्यप्रिय एवं सत्यप्रदाता हुनुहुन्छ, ब्रह्मा र विष्णु जसको स्तुति गर्दछन्, स्वेच्छानुसार शरीर धारण गर्नुहुने उनै भगवान् शंकरलाई म नमस्कार गर्दछु ।

**गौरीपति भगवान् शिव**

विश्वोद्भवस्थितिलयादिषु हेतुमेकं
गौरीपतिं विदिततत्त्वमनन्तकीर्तिम् ।
मायाश्रयं विगतमायमचिन्त्यरूपं
बोधस्वरूपममलं हि शिवं नमामि ॥

जो विश्वको उत्पत्ति, स्थिति र लय आदिको एकमात्र कारण हुनुहुन्छ, गौरी गिरिराजकुमारी उमाका पति हुनुहुन्छ, तत्त्वज्ञ हुनुहुन्छ, जसको कीर्तिको अन्त छैन, जो मायाको आश्रय भएर पनि त्यसदेखि अत्यन्त टाढा छ तथा जसको स्वरूप अचिन्त्य छ, ती विमल बोधस्वरूप भगवान् शिवलाई म प्रणाम गर्दछु ।

**महामहेश्वर**

ध्यायेन्नित्यं महेशं रजतगिरिनिभं चारुचन्द्रावतंसं
रत्नाकल्पोज्ज्वलाङ्गं परशुमृगवराभीतिहस्तं प्रसन्नम् ।
पद्मासीनं समन्तात् स्तुतममरगणैर्व्याघ्रकृत्तिं वसानं
विश्वाद्यं विश्वबीजं निखिलभयहरं पञ्चवक्त्रं त्रिनेत्रम् ।

चाँदीको पर्वतसमान जसको श्वेत कान्ति छ, जो सुन्दर चन्द्रलाई आभूषणको रूपमा धारण गर्नुहुन्छ, रत्नमय अलंकारहरूले जसको शरीर उज्ज्वल छ, जसको हत्केलामा परशु तथा मृग, र अभय मुद्रा छ, जो प्रसन्न हुनुहुन्छ, जो पद्मको आसनमा विराजमान हुनुहुन्छ, देवतागण जसको चारैतिर उभिएर स्तुति गर्दछन्, जसले बाघको छाला लाउनुहुन्छ, जो विश्वका आदि, जगत्को उत्पत्तिका बीज र समस्त भयहरूलाई हर्ने हुनुहुन्छ, जसको पाँच मुख र तीन नेत्र छन्, त्यस महेश्वरको प्रतिदिन ध्यान गरौं ।

**पञ्चमुख सदाशिव**

मुक्तापीतपयोदमौक्तिकजवावर्णैर्मुखैः पञ्चभिः
त्र्यक्षैरञ्चितमीशमिन्दुमुकुटं पूर्णेन्दुकोटिप्रभम् ।
शूलं टङ्ककृपाणवज्रदहनान् नागेन्द्रघण्टाङ्कुशान्
पाशं भीतिहरं दधानममिताकल्पोज्ज्वलं चिन्तयेत् ॥

जुन भगवान् शंकरको पाँच मुखमा क्रमशः ऊर्ध्वमुख गजमुक्ताको समान हल्का रातो रङको, पूर्व मुख पीतवर्णको, दक्षिण मुख सजल मेघसमान नील वर्णको, पश्चिम मुख मुक्तासमान अलि खैरो रङको र उत्तर मुख जवापुष्पसमान प्रगाढ रक्त वर्णको छ, जसको तीन आँखा र सबै मुखमण्डलमा निलो वर्णको मुकुटका साथमा चन्द्रमा सुशोभित भइरहेको छ, जसको मुखमण्डलको आभाले करोडौं पूर्ण चन्द्रले जस्तै आह्लादित गर्दछ, जसले आफ्ना हत्केलामा क्रमशः त्रिशूल, टङ्क (परशु), तलवार, वज्र, अग्नि, नागराज, घण्टा, अङ्कुश, पाश तथा अभयमुद्रा धारण गर्नुभएको छ एवं जो अनन्त कल्पवृक्षसमान कल्याणकारी हुनुहुन्छ, ती सर्वेश्वर भगवान् शंकरको ध्यान गर्नुपर्दछ ।

**अम्बिकेश्वर**

आद्यन्तमङ्गलमजातसमानभाव-
मार्यं तमीशमजरामरमात्मदेवत् ।
पञ्चाननं प्रबलपञ्चविनोदशीलं
सम्भावये मनसि शंकरमम्बिकेशम् ॥

जो आदि र अन्तमा (तथा मध्यमा पनि) नित्य मङ्गलमय हुनुहुन्छ, जसको समानता अथवा तुलना कतै पनि छैन, जो आत्माको स्वरूपलाई प्रकाशित गर्ने देवता (परमात्मा) हुनुहुन्छ, जसका पाँच मुख छन् र जसले खेलैखेलमा अनायास जगत्‌को रचना, पालन र संहार तथा अनुग्रह एवं तिरोभावरूप पाँच प्रबल कर्म गर्नुहुन्छ, त्यस सर्वश्रेष्ठ अजर, अमर ईश्वर अम्बिकापति भगवान् शंकरको म मनमनै चिन्तन गर्दछु ।

**पार्वतीनाथ भगवान् पञ्चानन**

शूलाही टङ्कघण्टासिशृणिकुलिशपाशाग्न्यभीतीर्दधानं
दोर्भिः शीतांशुखण्डप्रतिघटितजटाभारमौलिं त्रिनेत्रम् ।
नानाकल्पाभिरामापघनमभिमतार्थप्रदं सुप्रसन्नं
पद्मस्थं पञ्चवक्त्रं स्फटिकमणिनिभं पार्वतीशं नमामि ॥

जसले आफ्नो करकमलमा क्रमशः त्रिशूल, सर्प, टङ्क, (परशु), घण्टा, तलवार, अंकुश, वज्र, पाश, अग्नि तथा अभयमुद्रा धारण गर्नुभएको छ, जसको प्रत्येक मुखमण्डल द्वितीयाको चन्द्रले युक्त जटाहरूले सुशोभित भइरहेको छ, जसका चन्द्र, सूर्य र अग्नि– यी तीन नेत्र छन्, जो अनेकौं कल्पवृक्षसमान आफ्ना भक्तहरूलाई स्थिर रहने मनोरथहरूबाट पूर्ण गरिदिनुहुन्छ अर्थात् जो सदा नै अत्यन्त प्रसन्न रहनुहुन्छ, जो कमलमाथि विराजमान् हुनुहुन्छ, जसको पाँच मुख छन् तथा जसको वर्ण स्फटिकसमान दिव्य प्रभाबाट आभासित भइरहेको छ, ती पार्वतीनाथ भगवान् शंकरलाई म नमस्कार गर्दछु ।

**भगवान् महाकाल**

स्रष्टारोऽपि प्रजानां प्रबलभवभयाद् यं नमस्यन्ति देवा
यश्चित्ते सम्प्रविष्टोऽप्यवहितमनसां ध्यानमुक्तात्मनां च ।
लोकानामादिदेवः स जयतु भगवाञ्छ्रीमहाकालनामा
बिभ्राणः सोमलेखामहिवलययुतं व्यक्तलिङ्गं कपालम् ॥

प्रजाको सृष्टि गर्ने प्रजापतिदेव पनि प्रबल संसारभयबाट मुक्त हुनका लागि जसलाई नमस्कार गर्दछन्, जो सावधान-चित्तका ध्यानपरायण महात्माहरूको हृदयमन्दिरमा सुखपूर्वक विराजमान हुनुहुन्छ र चन्द्रमाको कला, सर्पहरूको कङ्कण तथा व्यक्त चिह्न भएको कपाललाई धारण गर्नुहुन्छ, सम्पूर्ण लोकका आदिदेव त्यस भगवान् महाकालको जय होस् ।

**श्रीनीलकण्ठ**

बालार्कायुततेजस धृतजटाजूटेन्दुखण्डोज्ज्वलं
नागेन्द्रैः कृतभूषणं जपवटीं शूलं कपालं करैः ।
खट्वाङ्ग दधतं त्रिनेत्रविलसत्पञ्चाननं सुन्दरं
व्याघ्रत्वक्परिधानमब्जनिलयं श्रीनीलकण्ठं भजे ॥

भगवान् श्रीनीलकण्ठ दसहजार बालसूर्यहरूका समान तेजस्वी हुनुहुन्छ, शिरमा जटाजूट, ललाटमा अर्धचन्द्र र मस्तकमा सर्पको मुकुट धारण गर्नुभएको छ, चारै हत्केलामा जपमाला,

शूल, नरकपाल र खट्वाङ्गमुद्रा छन् । तीन नेत्र छन्, पाँच मुख छन्, अति सुन्दर विग्रह छ, बाघम्बर पहिरिनुभएको छ र सुन्दर पद्ममा विराजमान हुनुहुन्छ । त्यस श्रीनीलकण्ठदेवको भजन गर्नुपर्दछ ।

**पशुपति**

मध्याह्नार्कसमप्रभं शशिधरं भीमाट्टहासोज्ज्वलं
त्र्यक्षं पन्नगभूषणं शिखिशिखाश्मश्रुस्फुरन्मूर्धजम् ।
हस्ताब्जैस्त्रिशिखं समुद्गरमसिं शक्तिं दधानं विभु
दंष्ट्राभीमचतुर्मुखं पशुपतिं दिव्यास्त्ररूपं स्मरेत् ॥

जसको प्रभा मध्याह्नकालको सूर्यसमान दिव्यरूपमा भासित भइरहेको छ, जसको मस्तकमा चन्द्र विराजित छ, जसको मुखमण्डल प्रचण्ड अट्टहासले उद्भासित भइरहेको छ, सर्प नै जसको आभूषण हो तथा चन्द्र, सूर्य र अग्नि– यी तीन जसको नेत्रको रूपमा अवस्थित छन्, जसको दाह्री र शिरको जटा चित्र विचित्र रङका मुजुरका प्वाँखसमान स्फुरित भइरहेको छ, जसले आफ्नो करकमलले त्रिशूल, मुद्गर, तरवार तथा शक्तिलाई धारण गरिराख्नुभएको छ र जसको चार मुख तथा दाह्री भयावह देखिन्छन्, यस्ता सर्वसमर्थ, दिव्य रूप एवं अस्त्रहरूलाई धारण गर्नुहुने पशुपतिनाथको ध्यान गर्नुपर्दछ ।

**भगवान् दक्षिणामूर्ति**

मुद्रां भद्रार्थदात्रीं सपरशुहरिणां बाहुभिर्बाहुमेकं
जान्वासक्तं दधानो भुजगवरसमाबद्धकक्षो वटाधः ।
आसीनश्चन्द्रखण्डप्रतिघटितजटः क्षीरगौरस्त्रिनेत्रो
दद्यादाद्यैः शुकाद्यैर्मुनिभिरभिवृतो भावशुद्धिं भवो वः ॥

जो भगवान् दक्षिणामूर्ति आफ्ना करकमलमा अर्थ प्रदान गर्ने भद्रामुद्रा, मृगीमुद्रा र परशु धारण गरिरहनुभएको छ र एउटा हत्केला घुँडामा टेकेर, कटिप्रदेशमा नागराजलाई लपेटेर वटवृक्षमुनि अवस्थित हुनुहुन्छ, जसको प्रत्येक शिरमाथिको जटामा द्वितीयाको चन्द्र जडित छ र वर्ण दूधसमान उज्ज्वल छ, सूर्य, चन्द्र र अग्नि– यी तीनै जसको तीन नेत्रको रूपमा स्थित छन्, जो सनकादि एवं शुकदेव आदि मुनिहरूबाट आवृत हुनुहुन्छ, त्यस भगवान् भव-शंकरले तपाईंको हृदयमा विशुद्ध भावना (विरक्ति) प्रदान गर्नुहोस् ।

**महामृत्युञ्जय**

हस्ताभ्यां कलशद्वयामृतरसैराप्लावयन्तं शिरो
द्वाभ्यां तौ दधतं मृगाक्षवलये द्वाभ्यां वहन्तं परम् ।
अङ्कन्यस्तकरद्वयामृतघटं कैलासकान्तं शिवं
स्वच्छाम्भोजगतं नवेन्दुमुकुटं देवं त्रिनेत्रं भजे ॥

त्र्यम्बकदेव अष्टभुजाले युक्त हुनुहुन्छ । उहाँको एउटा हत्केलामा अक्षमाला र अर्को हत्केलामा मृगमुद्रा छ, दुवै हत्केलाबाट दुई कलशमा अमृत रस लिएर त्यसबाट आफ्नो मस्तकलाई आप्लावित गरिरहनुभएको छ र दुवै हत्केलामा कलशलाई थामिरहनुभएको छ । बाँकी दुई हत्केलालाई उहाँले आफ्नो अङ्कमा राखिराख्नुभएको छ र त्यसमा दुई अमृतपूर्ण घडा छन् । उहाँ श्वेत पद्ममा विराजमान हुनुहुन्छ, मुकुटमा बालचन्द्र सुशोभित छ, मुखमण्डलमा तीन नेत्र शोभायमान देखिन्छन् । यस्ता देवाधिदेव कैलासपति श्रीशंकरको म शरण ग्रहण गर्दछु । जय गुरुदेव !

*(परमपूज्य सद्‌गुरुदेव श्री शिव गोरक्षसम्बन्धी विभिन्न सत्य तथ्य कुराहरूको बारेमा जानकारी दिने क्रममा श्री सावर संरचना शक्ति केन्द्र नेपालद्वारा प्रकाशित तथा योगी शिवशक्तिश्वरानन्द एवं योगी कर्मवीरानन्दद्वारा लिखित 'श्री शिव गोरक्ष-नाथंप्रदाय' ग्रन्थबाट विभिन्न प्रसंगहरू क्रमशः प्रकाशित गर्दै आइरहेका छौं ।)*

# श्री शिव गोरक्ष-नाथंप्रदाय

**नवनाथ उपदेश प्रसङ्ग**

नवनाथको चर्चा गर्ने क्रममा हामीले नवनाथको परिभाषा, नवनाथभित्र पर्ने नाथयोगीहरूको नामावली आदिका बारेमा चर्चा गर्दै आइरहेका छौं । नवनाथका योगीहरूको स्वरूपको बारेमा चर्चा गरिसकेपछि नवनाथ कथालाई पनि यहाँ चर्चा गर्न लागेका छौं ।

नौलिकारसिक राजगुरु मौक्तिकनाथद्वारा रचित नवनाथ कथामा प्राचीनकालमा नवनाथहरूले दिनुभएका उपदेशहरूका बारेमा चर्चा गरिएको छ । राजा निमीको रज्यसभामा राजा निमीले गरेका प्रश्नहरू र नवनाथ योगीहरूले दिनुभएका उत्तरहरूलाई यहाँ विस्तृतरूपमा व्याख्या गर्न लागिएको छ ।

ज्योतिस्वरूप ॐकार महेश्वर आदिनाथ हुनुहुन्छ भने धरणीस्वरूपा पार्वती विख्यात उदयनाथ हुनुहुन्छ । जलस्वरूप ब्रह्मा सत्यनाथ, तेजस्वरूप विष्णु सन्तोषनाथ, वायुरूप शेषनाग अचलनाथ हुनुहुन्छ। आकाशस्वरूप गणेश गजकन्थडनाथ हुनुहुन्छ। वनस्पतिस्वरूप चन्द्रमा चौरङ्गीनाथ, मायास्वरूप करुणामय मत्स्येन्द्रनाथ र अलक्ष्यस्वरूप अयोनिज शंकर त्रिनेत्र गोरक्षनाथ हुनुहुन्छ । यसरी नवनाथहरूको स्वरूपको सिद्धयोगीहरूले व्याख्या गरेका छन्। नवशक्तियुक्त नवनाथलाई नमस्कार गर्दै नवधाभक्ति नवनाथको लागि नै नवनाथ कथा भनिएको पाइन्छ ।

प्राचीन समयमा एकपटक नवनाथ मण्डलीहरू भ्रमण गर्ने क्रममा धर्ममा नीतिराज निमीको राज्यसभामा पुग्नुहुन्छ । नवनाथ योगीहरू आफैमा सिद्धहस्त व्यक्तित्व हुनुहुन्छ । उहाँहरूको लागि कुनै पनि चीज असम्भव छैन, उहाँहरू जतिबेला जहाँ प्रकट हुन मन लाग्यो त्यहीँ प्रकट हुनुहुन्छ। उहाँहरूको गतिलाई रोक्ने कुनै अर्को शक्ति छैन। समस्त ब्रह्माण्डमा विचरण गरेर हिँड्ने नाथयोगीहरू यही सिलसिलामा राजा निमीको राज्यसभामा पुग्नुभयो ।

राजा निमी धार्मिक प्रवृत्तिका हुनुको साथै साधुसन्तहरूका परमभक्त थिए। उनको राजसभामा साधुसन्तहरूको जमघट भइरहन्थ्यो । नवनाथको आगमन उक्त राजसभामा भएको देखी राजालगायत सम्पूर्ण साधुसन्तले स्वागत-सत्कारका

साथ प्रणाम गरे । राजा निमीले पनि शक्तिका तेजपुञ्ज नवनाथलाई साक्षात् ईश्वरको स्वरूप सम्झी पूजाआजा एवं आदर-सत्कार गरी उहाँप्रति बडो प्रसन्नताका साथ भक्तिभाव प्रकट गरे । तत्पश्चात् राजा निमीले आफूलाई लागेका जिज्ञासा एवं कौतुहलहरूलाई खुशी एवं प्रसन्नताका साथ नम्रभावमा राखे । ती प्रश्नहरूको निरूपण क्रमश: नवनाथ सिद्धहरूले दिँदै जानुभयो । ती प्रश्न एवं उत्तरहरूलाई यहाँ सविस्तार वर्णन गर्न लागिएको छ ।

## आदिनाथ उपदेश प्रसंग

राजा निमीले पहिलो प्रश्न सोध्नुभयो- 'हजूरले त्रिलोकलाई नजिकबाट नियालिरहनुभएको छ एवं संसारको कल्याणहेतु ब्रह्माण्डमा विचरण गरिरहनुहुन्छ । हे परम योगेश्वर ! संसारमा त्यस्तो कुन उपाय होला जसले प्राणी मात्रको कल्याण गर्न सक्दछ ?'

राजा निमीको जगत कल्याणकारी प्रश्न सुनी नवनाथमध्ये ॐकारस्वरूप आदिनाथले उत्तर दिँदै भन्नुहुन्छ- 'हे राजन ! यस संसारमा भगवान्को चरणको उपासना नै यस्तो माध्यम हो जुन कदापि नाश हुँदैन र सम्पूर्ण किसिमका भयबाट छुटकारा दिलाउने यही नै कल्याणको साधन हो । ईश्वरोपासनाले शरीर आदिको अभिमानमा डुबेका पुरुषका सबै भय, बाधाहरू हट्दछन् । हे विदेहराज ! भगवद्भक्तहरू अविद्याबाट भयभीत हुँदैनन् । उनीहरूको सम्पूर्ण विघ्न नष्ट हुन पुग्दछ । मन, वचन, कर्मबाट शास्त्र दृष्टि विधिबाट गरिने ईश्वरार्पित कर्म नै भगवद्धर्म हो । राजन ! भय भगवान्को मायाबाट हुन्छ, यसैले भगवान्लाई नै परम गुरु मान्नुपर्दछ र आफ्नो गुरुमा भगवद्बुद्धिद्वारा वार्तालाप गर्नुपर्दछ किनकि जगन्मोहनी मायाबाट मोहित भगवद्विमुखलाई भगवत्स्वरूपको ज्ञान हुँदैन । यो मेरो हो, यो फलानोको हो भन्ने किसिमको भेदबुद्धिले प्राणीहरू बन्धनमा पर्दछन् । यसैले, मायालाई हटाउनको लागि, यसबाट छुटकारा प्राप्त गर्नको लागि भगवान्को उपासना गर्नुपर्दछ । स्वप्नमा देखेका दृश्यहरू सम्पूर्ण नै मिथ्या हुन्छन् र जगत मिथ्या भएर पनि जाग्रतमा दृश्यहरू सत्य प्रतीत हुन्छन् किनकि आदिकालदेखि रूपबाट सत्य छ, तैपनि संयोग वियोगात्मकताबाट मिथ्या छ । यसैले पुरुष सङ्कल्प विकल्पात्मकलाई आफ्नो मनको वशमा राखी अगाडि बढेमा पराभक्ति उत्पन्न हुन्छ र त्यसबाट अभय प्राप्त हुन्छ । यदि मनलाई वशीकरण गर्न कठीन भए भगवान्को स्मरण गर्नुपर्दछ । भगवान्को भक्ति, पूजन, आरती, कीर्तन गर्नुपर्दछ । यसरी जसले आफ्नो मन भगवान्मा  लगाउँछन्, उनीहरू आफ्नो भन्ने भाव नभई जडवत् भई नाच्न लाग्दछन् । कुनै बेला उनीहरू हाँस्न लाग्दछन् त कुनै बेला रुन थाल्दछन्, कुनै बेला भगवान्को स्तुति एवं भजनमा आफूलाई चुर्लुम्म डुबाउँछन् । कहिले कराउने, उफ्रिने गर्दै भगवान्प्रति समर्पित हुन लाग्दछन् भने कुनै बेला निश्चल भएर ध्यान गर्न थाल्दछन् । यो भक्तिको दास्रो उपाय हो । संसारमा जति पनि पदार्थहरू छन्, ती सबै भगवत्स्वरूप छन् भनी सम्झेर सर्वत्र भक्तिपूर्वक ईश्वरलाई देख्ने, प्रणाम गर्ने गर्नुपर्दछ । यसो गर्दा हाम्रो विभिन्न भक्ति तुष्टि हुन्छ र भक्तको पल-पल वैराग्य हुन्छ ।

हे निमीराज ! यसप्रकारले भक्तिपूर्वक भगवान्को भजन गर्दै अगाडि बढ्न भक्तको भक्ति ज्ञानोत्पत्ति गर्न समर्थ हुन्छ र शरीर छोडेपश्चात् उसले मुक्ति प्राप्त गर्दछ ।'

## नाथ सिद्ध उदयनाथ उपदेश प्रसङ्ग

यति कुरा सुनेर राजर्षि निमीले पुन: प्रश्न गर्न लाग्नुभयो- 'हे शिव योगीहरू हो ! ती भक्तहरूको कुन धर्ममा अधिक श्रद्धा हुन्छ ? वाणी कस्तो हुन्छ ? उनीहरूलाई कसरी चिन्न सकिन्छ ?'

यो सुनेर द्वितीय योगेश्वर उदयनाथ उपदेश दिन थाल्नुहुन्छ- 'हे राजन ! भगवान्को उत्तम भक्त आत्मालाई सर्वत्र ब्रह्मवत्रूपमा व्यापक देख्दछन् । साथै समस्त चराचरलाई आत्मामा देख्दछन् । मध्यम श्रेणीका भक्त भेदबुद्धिबाट भगवान्को भक्ति, भक्तहरूमा मित्रता, अज्ञानीहरूमा दया र शत्रुहरूलाई उपेक्षा गर्दछन् । तृतीय श्रेणीको प्रवृत्ति हुन गयो भने संसार मायामय भन्ने जानी प्रतिकूल विषयहरूमा वैरभाव ल्याउँदैनन् भने अनुकूल परिस्थितिमा पनि हर्ष गर्दैनन् । यी श्रेष्ठ खालका भक्त हुन्छन् जो सदा भगवान्को भजन गर्दछन् । शरीरमा स्थित इन्द्रियहरूको धर्ममा आसक्ति राख्दैनन् र कर्मबाट उनीहरूमा वासना उत्पन्न हुँदैन । जसको आधार एक मात्र ईश्वर हुन्छन्, ती भक्तहरू उत्तम भक्त हुन् । जसमा कुल, जाति, वर्ण, आश्रम, मित्र, विद्या, मान, धन, बन्धुहरूको अभिमान हुँदैन, प्राणी मात्रलाई जो समान देख्दछन् एवं जसले विषय भोगविलासलाई तुच्छ मानी भगवान्मा मनोयोग गर्दछन्, ती भक्तहरू नै उत्तम भक्त हुन् ।'

## नाथ सिद्ध सत्यनाथ उपदेश प्रसङ्ग

द्वितीय योगेश्वर उदयनाथबाट आफ्नो उत्तर सुनी राजा निमी पुन: हात जोडी प्रश्न गर्नुहुन्छ- 'हे योगीश्वर ! यो समस्त जगत भगवान्को मायामय छ, यदि यो कुराको जानकारी प्राप्त गर्नु नै उत्तम हो भने मायाको पनि वर्णन गरिदिनुहोस् ।'

राजा निमीको प्रश्न सुनी नवनाथमध्येका तृतीय योगेश्वर

सत्यनाथ ब्रह्मा भन्नुहुन्छ- 'हे राजर्षि, प्राणीहरूलाई भोग मोक्ष दिनको लागि भगवान्ले पञ्चभूतबाट जति पनि भूत प्राणी उत्पन्न गरेका छन्, यो उनको माया हो । जीव अन्तरात्माको ज्योतिको प्रकाशबाट प्रकाशित इन्द्रियहरूद्वारा विषय वर्गको उपयोग गर्दै शरीरमा म हुँ, इन्द्रियमा म हुँ भनी यस्तो जसले जान्दछ, मान्दछ, यही भगवान्को माया हो । कर्मेन्द्रियबाट कर्म गरी सुख, दुःख आदि भोग गर्दै अगाडि बढ्ने प्राणीहरू बारम्बार जन्म लिन्छन्, मर्दछन् तर मुक्ति प्राप्त गर्दैनन्, यो भगवान्को माया हो । प्रलयको समय आउनाले सय वर्षसम्म निरन्तर अनावृष्टि हुन्छ । सहस्र सूर्य प्रकाशित हुन्छ । फेरि सय वर्षसम्म निखंच्छित्रितया हरित शुण्डसमान जलधाराबाट मेघ वर्षिन्छ जसबाट विश्व जलमग्न हुन्छ । पृथ्वी जलमा लीन हुन्छ । तेज वायुमा लीन हुन्छ । वायु आकाशमा लीन हुन्छ । आकाश तामस अहङ्कारमा लीन हुन्छ । इन्द्रियहरूसँग बुद्धि राजस अहङ्कारमा लीन हुन्छ । इन्द्रिय र मनको देवता सात्विक अहङ्कारमा लीन हुन्छ । अहङ्कार महत्तत्त्वमा लीन हुन्छ । महत्तत्त्व प्रकृतिमा लीन हुन्छ, इत्यादि यही त्रिगुणात्मक समस्त संसार भगवान्को माया हो ।

## नाथ सिद्ध सन्तोषनाथ उपदेश प्रसङ्ग

योगेश्वर सत्यनाथको उत्तरपछि पुनः राजा निमी प्रश्न गर्नुहुन्छ- 'हे सिद्ध हो ! विषयवासनाबाट बद्ध जीवले यसको मायाबाट कसरी छुटकारा प्राप्त गर्न सक्दछन् ?'

त्यसपछि चतुर्थ योगेश्वर सन्तोषनाथ विष्णु भन्नुहुन्छ- 'हे राजन् ! दुस्तर मायारूपी नदीलाई पार गर्नको लागि भक्तिको डुङ्गाबिना अर्को कुनै साधन छैन, कर्म जालोमा फसेका मोहन्धाको निस्तार छैन । बिना भक्ति नाना प्रकारका उपायद्वारा आर्जित धनबाट शाश्वत सुख हुँदैन किनकि समस्त सांसारिक सुख क्षणभङ्गुर छ । यस्तै प्रकार स्वर्गमा न्यूनाधिक तारतम्यबाट इर्ष्या, द्वेष आदि दोषबाट दुःख बढी र सुख कम हुन्छ । कर्मफलको समाप्तिमा तल झर्नुपर्दछ । यसैले भक्तहरूले कर्म र ब्रह्म दुवै तत्त्व जान्ने, सकल निगम तथा आगममा निष्णात, योगको अनुष्ठानबाट अन्तःकरणको वासनालाई भस्म गर्ने, पवित्र हृदयले समस्त जगतलाई निहार्ने, शिष्यको चित्तको सन्ताप हरण गर्ने शिवयोगी गुरुको शरणमा जानुपर्दछ । विधिपूर्वक गुरुकुलमा निवास गरी मन, वचन र कर्मले सर्वदा एवं सर्वथा भगवद्बुद्धिबाट गुरुको सेवा गर्दै कटुता त्याग्दै निष्कपट भावबाट हृदयका समस्त संशयलाई गुरु चरणमा निवेदन गर्दै गुरुबाट निर्देशित मार्गमा प्रथम मित्र, पुत्र, कलत्र, धन, धान्य, देह, गेह आदिमा वैराग्यवान साधु सङ्गतिको रीति जान्नुपर्दछ । तत्पश्चात् सुखीमा मित्रता, दुःखीमा करुणा, पुण्यात्मामा मुदिता र पापमा उपेक्षाको भावना गर्दै चित्तलाई प्रसन्न राख्नुपर्दछ । जल आदिबाट बाह्यशुद्धि र यम, नियम, आदिबाट अन्तःकरण शुद्धि गर्नुपर्दछ । यसबाट निर्लोभ, निस्परिग्रह, निरहङ्कार, निरातङ्क, निरामय, निस्पृह, वीतराग, अवधूत भई यसबाट प्राप्त लाभबाट सन्तुष्ट भई जटाधारी बुकल्ल वस्त्रावन, कन्दमूल फलाहारी जनसंसर्गरहित भई दिन बिताउनुपर्दछ । शास्त्रमा श्रद्धा, गुरुमा भगवद्बुद्धि, दुष्कर्म, वादविवादको परित्याग, वेदविरुद्ध मतिको तिरस्कार, श्रुति संवादबाट प्राप्त स्मृतिहरूको परीक्षा,

नित्य धर्मको चिन्तन, मितभाषी, व्यर्थ लाभबाट विरक्ति, प्राणायाममा परायणता, इन्द्रियहरूको निग्रह, मनको वशीकरण र भगवान्को जन्म, कर्म, गुणको नित्य श्रवण तथा श्रेष्ठ कर्मको आचरण इत्यादि अनवद्य कर्म गुरुबाट सिक्नुपर्दछ र विपरीत कुराहरूको त्याग गर्नुपर्दछ । यज्ञ, दान, व्रत, उपवास, जप, तप, सदाचार तथा अन्य वैदिक कर्मको अनुशरण गर्नुपर्दछ र गुरूप्रदत्त प्राप्ति विधिबाट भगवान्को चरणमा अर्पण गर्नुपर्दछ ।

स्त्री, पुत्र, धन, बन्धु गृहादि समस्तलाई भगवद्प्रदत्त प्रसाद ठानी यथासमय उपयोग गर्नुपर्दछ । पहिले स्थावर पनि उनमा, जङ्गम पनि उनमा, मनुष्य पनि उनमा, धर्मसेवी भगवत्भक्त पनि उनमा भन्ने मानी योगीश्वरको ईश्वर बुद्धिले सेवा गर्नुपर्दछ जसबाट भगवान्मा तन्मयता हुन्छ । जब यसप्रकारको पराभक्तिबाट भगवान्मा तन्मयता हुन्छ तब ती भक्तहरू भगवान्को दर्शन बिना आफ्नो मन्दभाग्य जानी धिक्कार्दै रुन थाल्दछन् । कहीँ भक्तवत्सल भगवान् भक्तिको वशमा हुन्छन्, यस्तो सोची प्रफुल्ल हुँदै हाँस्दछ त

कुनै बेला आर्तजस्तो उच्चस्वरले चित्कार गर्दछ । कदाचित् परमानन्दबाट खुशी भई नाच्दछ त कुनैबेला भगवान्को ध्यानमा निमग्न भई स्थाणुसमान निश्चल हुन्छ । यसप्रकार भगवान्का भक्त मायाबाट तर्दछन् ।

## नाथ सिद्ध अचलनाथ उपदेश प्रसङ्ग

राजा निमीले चौथा योगश्वर सन्तोषनाथको उत्तर सुनिसकेपछि पुन: प्रश्न गर्नुहुन्छ, 'हे अवधूत ! ब्रह्मको कुन स्वरूप छ ? ब्रह्मा, सदाशिव, नारायण, भगवान्, परमात्मा, आदिनाथ, ईश्वर, गोरक्ष इत्यादि शब्दहरूको अर्थ एउटै हो वा फरक-फरक छन् ? सविस्तार बयान गरिदिनुहोस् ।'

राजा निमीको यस्तो प्रश्न सुनी पञ्चम योगेश्वर अचलनाथ भन्नुहुन्छ, 'हे विदेहराज ! एकै ब्रह्म नै विभिन्न सम्बन्धमा विभिन्न स्वरूपमा हुँदा भिन्न जस्तो लाग्दछ । जसले सृष्टि गर्दछ उसलाई स्रष्टा भनिन्छ, त्यस्तै जसले रक्षा गर्दछ उहाँ गोरक्ष हुनुहुन्छ । जसले संहार गर्नुहुन्छ, उहाँ हर हुनुहुन्छ, जो व्याप्त हुनुहुन्छ उहाँ नै विष्णु हुनुहुन्छ । जसले 'शं'मा कल्याण गर्नुहुन्छ उहाँ नै शंकर हुनुहुन्छ । जसमा जगत् सुत्दछ, उहाँ शिव हुनुहुन्छ । जो विशेष गरी विराजमान् हुनुहुन्छ उहाँ नै विराट् हुनुहुन्छ । 'शं' सुख जसमा हुन्छ उहाँ शम्भु हुनुहुन्छ । जो प्राणीहरूका शासक हुनुहुन्छ उहाँ ईश्वर हुनुहुन्छ । जसले रुवाउनुहुन्छ उहाँ रुद्र हुनुहुन्छ । जसले जगतको नाश गर्नुहुन्छ उहाँ शर्व हुनुहुन्छ । जो समर्थ हुनुहुन्छ, उहाँ ईशान हुनुहुन्छ । कर्मफल भोग्ने जीव पशु हुन्छन् । उनीहरूका पालक पशुपति हुनुहुन्छ । ज्ञानका पति पशुपति हुनुहुन्छ । जो भूत-प्राणीहरूको ईश हुनुहुन्छ उहाँ भूतेश हुनुहुन्छ । जो महान् ईश्वर हुनुहुन्छ उहाँ महेश्वर हुनुहुन्छ । जो प्राणीहरूको प्रेरक हुनुहुन्छ उहाँ प्रभु हुनुहुन्छ । जसमा संसार समाहित छ उहाँ भव हुनुहुन्छ । विविध नामरूपमा व्याप्त जसले क्रीडा गर्नुहुन्छ उहाँ देव हुनुहुन्छ । जो महान् देव हुनुहुन्छ उहाँ महादेव हुनुहुन्छ । जो व्याप्त छ त्यही आत्मा हो । जो परम ईश्वर हुनुहुन्छ उहाँ परमेश्वर हुनुहुन्छ । षडैश्वर्य भग हुन्छ, भगवाला नै भगवान् हुनुहुन्छ । फललाई नारा भनिन्छ, नारा अयनपूर्व निवास जसको छ उहाँ नारायण हुनुहुन्छ । जो सर्वान्तमा शेष रहनुहुन्छ उहाँ शेष हुनुहुन्छ । हृदयमा गमन रहने नै इन्द्र हुनुहुन्छ । शरीरभित्र जो शयन गरेका छन् उनै पुरुष हुन् । जसले आफूसँग मिलन हुनेहरूलाई त्राण गर्दछन् उनै मित्र हुन्, जसले जगतको वरण गर्दछन् उनै वरुण हुन् । जसले जीवको नियमन गर्दछन् उनै यम हुन् । दहराकाशमा जसले गमन गर्दछन् उनै मातरिश्वा हुन् । जसले समस्त नरहरूलाई आफूमा लिनुहुन्छ उहाँ वैश्वानर हुनुहुन्छ । जुन सर्वत्र जान्छ त्यही वायु हो, जसले सर्वोच्च पदमा लैजान्छ त्यो अग्नि हो । जो ऐश्वर्यवान् हुनुहुन्छ, जसले आर्शीवादबाट कल्याण गर्नुहुन्छ उहाँ नाथ हुनुहुन्छ । जो लोकको नाथ हुनुहुन्छ उहाँ लोकनाथ हुनुहुन्छ । जसमा सबै लोक स्थित छ उहाँ वसु हुनुहुन्छ । वसुरूपी देव नै वसुदेव हो । वसुदेव नै वासुदेव हो । जो विश्वको विधान धारण गर्नुहुन्छ उहाँ विधाता हुनुहुन्छ । जसमा योगीहरू रमण गर्दछन् उहाँ राम हुनुहुन्छ । जो परब्रह्म हुनुहुन्छ उहाँ ब्रह्मा हुनुहुन्छ । यसप्रकार एक परमेश्वरलाई नाना कार्यभेदहरूले गर्दा विभिन्न नामहरूमा निरुक्ति गरिन्छ तर वास्तविक रूपमा कुनै भेद छैन । जो जीवको जागृत, स्वप्न र सुषुप्तिमा साक्षीको रूपमा रहन्छ त्यही ब्रह्म हो । जुन समाधिमा परमज्योति छ त्यही नै ब्रह्म हो । जसरी स्फुलिङ्गले 'महाग्नि'लाई प्रकाशित गर्न सक्दैनन् तर आत्मादेखि प्रकाशित हुन्छ । जहाँबाट वेद पनि मनको साथ जान्छन् त्यहाँ इन्द्रियहरूको के हालत होला ? जसको वाणी पनि प्रेरक छ उहाँ नै ब्रह्म हो भनी श्रुति मौन बसेको छ । संसार जुन स्थूल छ र जुन सूक्ष्म छ त्यही ब्रह्म हो किनकि सबैको मूल कारण ब्रह्म हो । अनन्त शक्ति भएकोले एक नै अनेक प्रकार प्रतीत हुन्छ । आत्मा न जन्मन्छ, न बढ्छ, न परिणत हुन्छ, न क्षीण नै हुन्छ, न त नष्ट नै हुन्छ किनकि तरुणता एवं वृद्धता शरीरको धर्म हो, न कि आत्माको । आत्मा नै सबैको आनन्दको दाता हो । जय गुरुदेव ।

# परमपूज्य सद्गुरुदेवको अवतरण यात्रा

## आदर्श गृहस्थ एवं विशाल हृदयका स्वामी

मलाई किंकर स्वामीको पंक्ति सम्झना भइरहन्छ। उनले भनेका थिए कि निखिलज्यूमा अरु अङ्गहरू छन् कि छैनन्, थाहा छैन । तर जहाँसम्म मलाई लाग्छ, उहाँको सारा शरीरमा हृदय नै हृदय भरिएको छ ।

जाडोको दिन थियो । हावा चल्नाले चिसो थपिँदै थियो । प्रातः भ्रमण गरी गुरुदेव र माताजी फर्कँदै हुनुहुन्थ्यो । बाटोमा गुरुदेवलाई भेट्न कानपुरका एकजना धनाढ्य राति जोधपुर आइपुगेछन् र होटेलमा बसेछन् । उनी बिहान चाँडै नै गुरुदेवलाई भेट्न उहाँको घरमा आए । गुरुदेव प्रातः भ्रमणमा जानुभएको थाहा पाएर गुरुदेव जानु भएतिर नै उनी पनि लागे । गुरुदेवसँग बाटोमा उनको भेट भयो । उनले गुरुदेवको लागि एउटा महङ्गो शल (च्यादर) ल्याएका थिए । बाटोमा गुरुदेवको चरण स्पर्श गरी उनले त्यो शल गुरुदेवलाई ओढाइदिए ।

घरको नजिकै एकजना भिखारी जाडोले काँप्दै मागिरहेको थियो । शरीरमा धोतीबाहेक च्यातिएको कुर्ता मात्र थियो उसको । गुरुदेवलाई देख्ने बित्तिकै उसले बोलायो– 'दाता पण्डितज्यू !' गुरुजीले यसो उसलाई हेर्नुभयो अनि अघि आफूलाई ओढाइदिएको च्यादर काँधबाट निकाली त्यस भिखारीलाई ओढाई केही नबोली हिँड्नुभयो । सेठजी पानी-पानी भए । कत्रो महानता, कत्रो उदारता, कति त्याग, कति निस्पृहता ! यत्रो विशाल हृदयका स्वामी हुनुहुन्छ गुरुदेव !

यति ठूलो विशाल ज्ञानको समुद्रको पत्तो पाउन सम्भव नै छैन । यति उच्च विराट् व्यक्तित्वले आफ्नो जीवन सानो घरमा बिताउनुभयो । जसको सम्पूर्ण ब्रह्माण्डमा गति छ, त्यस योगीले एउटा गाडीमा बसेर विचरण गर्नुभयो । यति सादा जीवन, यति विशाल हृदयले आज हामीलाई विस्मित गरिदिन्छ । तर सत्य त सत्य नै हो । पूज्य गुरुदेवको गृहस्थ पक्ष देख्दा त आश्चर्य लाग्छ । उहाँले खेलपढ गर्नुभयो, एम.ए. गर्नुभयो अनि पि.एच.डी. गरेर विश्वविद्यालयमा प्रोफेसर हुनुभयो, विभागाध्यक्ष बन्नुभयो । उहाँकी पत्नी हुनुहुन्छ, पुत्रपुत्रीहरू छन्, सबैको लालनपालन गर्नुभयो । एकातिर उहाँले गुरूपदको गरिमालाई श्रेष्ठता दिनुभयो भने अर्कोतिर पिताको कर्तव्यको पनि पालना गर्नुभयो । उहाँले सन्तानलाई चुनौतिहरूको सामना गर्न सिकाउनुभयो, उच्चशिक्षा दिलाउनुभयो, जीवनका आवश्यक सुख-सुविधाहरू दिनुभयो अनि विवाह आदि गरिदिएर वानप्रस्थको मर्यादाको रक्षा गर्नुभयो, कसरी यी सबै कार्यहरूमा लिप्त रहेर पनि विरक्त हुन सकिन्छ भन्ने समाजलाई नयाँ चिन्तन दिनुभयो । कसरी कर्तव्य र अधिकारलाई पूर्णता दिन सकिन्छ भन्ने शिवपुराणको पूरा आदर्श गृहस्थ यस धरामा हामी सबैले देख्न पायौँ । जय गुरुदेव !

*यस स्तम्भअन्तर्गत परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको रहस्य नै रहस्यले भरिएको अवतरण यात्रालाई क्रमशः प्रकाशित गर्दै आएका छौँ । आशा छ यसबाट पाठकवर्ग लाभान्वित हुनुहुनेछ ।*

*यस स्तम्भअन्तर्गत परमपूज्य सद्गुरुदेव डा. नारायण दत्त श्रीमालीज्यू (परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज) ले आफ्नो अवतरणकालमा दिनुभएका प्रवचनहरु प्रकाशित गर्दै आइरहेका छौँ ।)*

# क्रियायोगको पूर्णता र सिद्धाश्रम प्राप्ति

***महान् व्यक्तित्वका धनी सद्गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यूले आफ्नो जीवनमा प्रत्येक कुरालाई त्यही रुपमा प्रस्तुत गर्नुभयो जुन रुपमा साधारण मानिसले बुझ्न सकून् । जीवनमा अविरलरुपले अगाडि बढ्दै पूर्णतातिर अग्रसर हुन सकियोस् र जीवनमा सिद्धाश्रम प्राप्त होस्, त्यसैको सारगर्भित विवेचना सद्गुरुदेवकै भाषा र शैलीमा :***

- अब तपाईंहरूले के बुझ्नु भयो ? यदि मैले अहिले यो भनि नै दिएँ भने पनि तपाईंहरूले के बुझ्नुहुन्छ ?
- यो अणु भनेको के हो ? यी महान्, विराट् र काल पुरुष के हुन् ?
- यी सबै कुरा बुझाउन गाह्रो छ ।

मैले क्रियायोगका बारेमा बताउँदै भनेँ– क्रियायोगका तीन स्टेज छन्– पहिलो धारणा, दोस्रो ध्यान, तेस्रो समाधि ।

मैले धारणाको बारेमा बुझाउँदै भनेँ कि हामी सादृश्यापेक्षी छौँ, हामी आफ्नो समकक्षीसँग मित्रता वा शत्रुता गर्न सक्छौँ । जँड्याहा जँड्याहासँग बसेर आनन्द मनाउन सक्छ । ऊ गुरुसँग बस्नै सक्दैन । विगत साठी वर्षमा एकचोटि पनि यस्तो मौका आएन कि भगवान्‌को अगाडि बोतल लिएर रक्सी खानमा उसलाई आनन्द आओस् । तसर्थ, हामी गृहस्थ हौँ, हाम्रा पत्नी छन्, छोराछोरी छन्, परिवार छन्, साथीभाइ छन् । त्यसैले हामीलाई त्यस्तै गुरुको आवश्यकता छ जो सादृश्यापेक्षी होऊन् ।

एउटा संन्यासी छ र आश्रममा बसेको छ । यदि उनीसँग गएर तपाईंले भन्नुहुन्छ– महाराज ! हजूर महान् हुनुहुन्छ र .... मलाई हजूरले ज्ञान दिनुहोस् । उसले भन्ला– पुत्र, आश्रममा बसेर चार, छ वर्ष सेवा गर, त्यसपछि विचार गरौँला । वास्तवमा तपाईंको र उसका बीच यति धेरै अन्तर छ कि तपाईं उसको बराबरी गर्नै सक्नुहुन्न । तपाईं न त संन्यास नै लिन सक्नुहुन्छ, न संन्यास प्रक्रियाको ज्ञान नै छ तपाईंमा । मात्र गेरुवा लुगा लाउँदैमा संन्यास आउन सक्दैन ।

भर्तृहरि गुरु कहाँ गएर निवेदन गर्दछन्– "म संन्यास लिन चाहन्छु ।"

गुरु भन्नुहुन्छ– "म तिमीलाई संन्यास अवश्य दिन्छु तर पहिले गुरुमंत्रको जप गर ।"

भर्तृहरिले एक हप्तासम्म लगातार गुरु मन्त्रको जप गरे ।

अनि गुरुले प्रश्न गरे– "अब भन, तिम्रो मनमा के इच्छा भइरहेको छ ?"

भर्तृहरिले भने- "अरु त विशेष केही छैन तर बीच-बीचमा पत्नीको सम्झना अवश्य आउँछ । ऊ विचरी कसरी बसेकी होली, म त यता आएँ, उसले सारा राजकाज कसरी चलाएकी होली ?"

गुरुले भने– "तिमी संन्यास लिन सक्दैनौ, फिर्ता जाऊ ।"

उनी पुनः राजा बने ।

सातपटक गुरु कहाँ आएर दीक्षा लिए र सातैपटक फर्केर पत्नी कहाँ गए । आठौँपटकमा पूर्ण दीक्षा लिन सफल

भए । संन्यास लिन यति सजिलो छैन, गेरुवा लुगा लाउँदैमा कोही संन्यासी हुन सक्तैन ।

श्लोकको आरम्भमा नै भनिएको छ कि जीवनको सत्यसहितको हाम्रो जीवन आनन्दमय होस्, निरोगी होस् । रोग पनि तीन प्रकारका हुन्छन्– पहिलो शारीरिक रोग, दोस्रो मानसिक रोग र तेस्रो आत्मिक रोग । यो कुरा म ग्यारेन्टीका साथ भन्न सक्छु कि संसारका प्रत्येक व्यक्तिलाई शारीरिक र मानसिक रोग छ । कसैले पनि यो भन्न सक्दैन कि म पूर्णरूपमा शारीरिक तथा मानसिकरूपले स्वस्थ छु । तेस्रो हो आत्मिक रोग, यसको तात्पर्य हो– कहिलेकाहीँ हाम्रो शरीरमा रगत उम्लन थाल्छ कि म केही गरुँ, केही प्राप्त गरुँ, तर केही पनि गर्न सकिँदैन । केही पनि प्राप्त गर्न सकिँदैन– सामाजिक समस्याले गर्दा, आर्थिक समस्याले गर्दा अथवा अन्य कुनै कारण गर्दा ।

यी तीनै प्रकारका रोगहरूबाट निवृत्त हुन एउटा विशेष प्रयोग यस क्रियायोगमा छ, यस प्रयोगलाई सम्पन्न गर्ने विधि आफैमा विशिष्ट छ । यो अत्यावश्यक छ कि व्यक्तिले यस प्रक्रियालाई राम्ररी पूर्णताका साथ बुझोस्, यसरी बुझोस् कि उसलाई जीवनमा उतार्न सकोस् र संसारको कुनै कुनामा पनि, जुनसुकै संन्यासी वा योगीलाई पनि क्रियायोग बुझाउन सकोस्, यस्तो क्षमता तपाईंमा आउन सक्नुपर्दछ ।

यदि तपाईंलाई इच्छा छ भने यस कुराको experiment गर्न सक्नुहुन्छ । तपाईं हरिद्वार, मथुरा अथवा काशी कतै पनि डुल्न गएको बेला त्यहाँ कुनै योगी, गुरु, साधु वा सन्यासीसँग भेट भयो भने यो सोध्नुहोस्- गुरुजी ! यदि महात्मा गान्धीले क्रियायोग सिक्ने चाहना राखेका थिए, यदि बाइबिलमा ईसा मसिहले भनेका छन् कि क्रियायोगबाट जीवनमा पूर्णता प्राप्त हुन्छ, यदि पैगम्बर साहबले कुरानमा क्रियायोगको वर्णन गरेका छन्, यदि सबै धर्महरूमा क्रियायोगलाई सत्य भनेका छन् भने यसमा अवश्यै पनि केही सत्यता होला । तसर्थ हजूरले हामीलाई क्रियायोगका बारेमा बताउनुहोस् ।

तपाईंलाई थाहा हुनेछ उनको विद्वताको बारेमा । हुन सक्छ उनलाईभन्दा धेरै त तपाईंलाई नै थाहा छ । ती योगीभन्दा धेरै राम्ररी तपाईंले नै बताउन सक्नुहुन्छ– भनेर पनि, प्राक्टिकलबाट पनि र प्रवचनको माध्यमबाट पनि किनकि तपाईं पूर्णताका साथ बुझ्न सक्नुहुन्छ । यो पूर्णता तपाईंले पाउन सक्नुहुनेछ गुरुको सान्निध्यबाट । क्रियायोग पूर्णरूपले प्राक्टिकल ज्ञान हो– तथ्य र चिन्तनको माध्यमले पनि जीवनमा प्रयोगको माध्यमले पनि ।

शंकराचार्यले यस क्रियायोगको संगुफन विधिलाई प्रष्ट पारे र बताए कि हामी रोगमुक्त कसरी हुने । तपाईं प्रयोग गरेर हेर्नुस् किनभने जब कुनै कुरा पूर्णरूपले मन्त्रसिद्ध भएमा त्यसले पूर्ण फल प्रदान गर्छ नै । व्यक्तिलाई पूर्णरूपले प्रवीण बनाउनु, योग्य बनाउनु, बलियो बनाउनु मन्त्र सिद्ध गर्नु नै हो ।

क्रियायोग सिक्नका लागि सबैभन्दा जरुरी यो छ कि सर्वप्रथम तपाईं रोगमुक्त जीवन प्राप्त गर्नुहोस् । रोगमुक्त जीवन प्राप्तिका लागि 'एक मुखी रुद्राक्ष'मा एउटा विशिष्ट प्रयोग बताइएको छ । तसर्थ यस प्रयोगलाई तपाईंले गर्नु नै पर्छ ।

घरमा यस प्रयोगलाई गर्दा आफ्नो अगाडि एउटा पिर्कामाथि एउटा तामाको प्लेट राख्नुस् । एउटा हकीक माला लिनुस् र यसलाई मात्र छको दुवैतर्फ तामाका दुई ढ्याक अथवा शुद्ध तामाका दुई तार ठाडो पारेर राख्नुस् (बजारमा पाइने तामामा फलाम मिसिएको हुन्छ, शुद्ध तामाको प्रयोग गर्नुहोला) त्यसको बीचमा त्यस रुद्राक्षलाई राख्नुस् (तामा र मन्त्रको संस्पर्शले रुद्राक्षमा आफै कम्पन हुन थाल्नेछ) । यी दुवैलाई कुनै तामाको भाडामा नै राख्नुस् । त्यसपछि रुद्राक्षमा बिस्तारै-बिस्तारै जल छर्कँदै मन्त्र उच्चारण गर्नुस्, यो मन्त्र दुई अक्षरको मात्र छ ।

**"सोऽहं"**

- यो "सोऽहं" शब्द कुनै विशेष धर्म वा सम्प्रदायको मन्त्र होइन । तिब्बतमा जति पनि लामाहरू छन् उनीहरू स्वयं विश्वका सर्वश्रेष्ठ तान्त्रिक र योगी छन् । यदि तपाईं कहिले धर्मशाला (यो स्थान भारतको हिमाञ्चल प्रदेशमा छ) जानुभयो भने त्यहाँ पूर्ण तान्त्रिक ज्ञानयुक्त कैयौं लामाहरू भेटिनेछन् । यी लामाहरूको गायत्री मन्त्र "सोऽहं" नै हो ।

**"सोऽहं वै परा पुरुष वै, वः रतवै व्रत क्रियात्मां वै सयोगत्वं वः"**

क्रिया शब्दको वर्णन, र 'सोऽहं' शब्दको वर्णनमा आर्यहरूले सर्वप्रथम जुन श्लोकलाई उद्घोषित गरे त्यसको प्रथम अक्षर नै सोऽहं छ ।

दिव्य मंत्र "सोऽहं"का बारेमा दुई हजार पानाको पुस्तक लेखे पनि यसको सही अर्थ बुझाउन सकिँदैन । यी दुई अक्षर स्वयंमा नै अत्यधिक गूढ छन् । "सोऽहं"को सारार्थ हो रोगरहित जीवनको पूर्णता । सोऽहंको अर्थ हो- सः + अहं - त्यो ब्रह्म म हुँ, म पूर्ण छु, सम्पूर्ण वाङ्मयको मूलाधार म हुँ । म 'अ' देखि 'ह' सम्मको पूर्ण ज्ञानलाई पिउनेवाला हुँ, त्यसैलाई 'सोऽहं' भन्छन् ।

वास्तवमा हामी सोऽहं त्यसबेला मात्र बन्न सक्छौं जुनबेला सम्पूर्ण ज्ञानलाई पिउन सक्छौं । अहंको अर्थ हो- घमण्ड, अहंकार । घमण्डको तात्पर्य हो- रोग, चाहे

त्यो मानसिक होस् अथवा शारीरिक ।

सम्पत्ति छ त त्यसमा घमण्डको के आवश्यकता छ ? तर धेरैजसो धनी मानिसहरू साह्रै घमण्डी हुन्छन् । फेरि कहिलेकाहीँ यस्तो पनि देखिन्छ कि जोसँग जति धेरै पैसा हुन्छ उति नै ऊ नम्र हुन्छ । तुच्छ व्यक्तिहरू जोसँग केही धन छ, ऊ ज्यादै उफ्रिन थाल्छ । त्यसो भए धनसँग यसको कुनै सम्बन्ध छैन । यदि कुनै सम्बन्ध छ भने त्यो सम्बन्ध छ मानसिक चिन्तनसँग । जस्तो मानसिक चिन्तन हुन्छ उस्तै व्यवहार हुन्छ, उस्तै रहन्छ स्वास्थ्य । यस रोगको निवृत्तिका लागि "सोऽहं" शब्दकै प्रयोग गरिएको छ ।

तसर्थ गुरुले शंकराचार्यलाई बताए- "क्रियायोग सिक्नुअघि तिमी पूर्णरूपले रोगरहित भएर म कहाँ आऊ । तिमी शिवको प्रतीक एकमुखे रुद्राक्षको माध्यमले, त्यस मालाको माध्यमले, जुन शक्तिको प्रतीक हो, शिव शक्तिको समन्वय गरेर, एउटा विद्युत् ऊर्जा उत्पन्न गरेर सबै रोगहरूलाई फाल्नु आवश्यक छ ।" अनि उहाँले शंकराचार्यलाई यही प्रयोग सम्पन्न गराउनुभयो ।

यस प्रक्रियाद्वारा तीनहजार वर्ष पुरानो कडी पुन: जोडिएको छ । शंकराचार्यलाई यो प्रयोग अवश्य गराइयो । तर त्यसबाहेक विगत तीनहजार वर्षमा यस प्रयोग सम्पन्न भएको होस्, यस्तो उदाहरण अर्को पाइँदैन । यो हुनै सकेन किनभने जुन कुरालाई बुझ्नै सकिएन त्यस कुरालाई प्रयोगमा कसरी ल्याउने ?

सोऽहं सोऽहं भनेर घोक्दैमा त "सोऽहं" हुन सक्दैन । यसको त एउटा निर्धारित विधि छ, एउटा तरीका छ जुन यसप्रकार छ- रुद्राक्षमाथि तामाको आचमनीले लगातार **'सोऽहं'** शब्दको जप गर्दै जाने र जल हाल्दै जाने ।

- "कति जल प्रक्षेप गर्ने ?"
- "एक्काइस तोला जल प्रक्षेप गर्ने । (झण्डै दुईसय ग्राम)"

त्यस जललाई दिनहुँ आफै खानुस्, शारीरिक रोग समाप्त हुन्छन् र निश्चितरूपले परिवर्तन स्वयं नै अनुभूति हुन थाल्नेछ । यसलाई संगुफन विधि भनिन्छ । यो विधि स्वयं शिव र शक्तिको पूर्ण संगुफितस्वरूप हो जसमा प्रक्षेपित जललाई "**अमृत तत्त्व**" भनिन्छ । यसलाई "**चन्द्रोदय जल**" पनि भनिएको छ । यस जललाई स्वयं ग्रहण गर्न सकिन्छ अथवा छिमेकीलाई पनि दिन सकिन्छ । जसले पनि यसको उपयोग गर्न सक्छ ।

अब तपाईंले प्रश्न गर्न सक्नुहुन्छ कि पानीबाट रोगमुक्ति कसरी हुन सक्छ ?

म पनि आश्चर्यचकित छु कि एउटा सानो चक्की खानाले टाउको दु:खेको कसरी निको हुन सक्छ । गोली त निकै सानो छ तर त्यस चक्कीमा टाउको दु:खाइ समाप्त पार्ने केही त क्षमता छ । यस मंत्रमा पनि केही दिव्य क्षमता छ जसले सधैंका लागि रोगमुक्त गर्न सक्छ । यो जल एकसय बीस दिनभन्दा बढी सेवन गर्नुपर्ने आवश्यता पर्दैन । सम्पूर्ण रोगहरूलाई समाप्त गर्न यो टाइमलिमिट हो- एकसय बीस दिन ।

यो प्रयोग तीनपटक गर्नुहोस् । तीनपटक यसकारण कि युग र वातावरणअनुसार प्रभावको गति अलि विस्तार हुन सक्छ । तर यो आवश्यक छैन किनकि कहिलेकाहीं एकैदिनमा पनि यसको प्रभाव हुन सक्छ । भनाइको तात्पर्य यति मात्र हो कि जसै तपाईंलाई यो अनुभूति हुन्छ कि म पूर्णरूपले रोगमुक्त भइसकें, बुझ्नुहोस् कि यो प्रयोग पूरा भयो । त्यसपछि माला तथा रुद्राक्षलाई पवित्र जलमा प्रवाहित गरिदिनुहोस् । जोसुकै क्रियायोगमा अगाडि बढ्न इच्छुक छ, उसले यो सब गर्न अनिवार्य नै हुन्छ, चाहे तपाईंलाई रोग लागेको होस् वा नहोस् । तर यस क्षेत्रमा अगाडि बढ्नलाई यो अनिवार्य शर्त हो किनभने कुनै शरीरमा रोग नहोला तर मानसिक रोग होला अथवा आत्मिक रोग त होला नै, ती रोगहरूलाई फाल्न यो विधिलाई ग्रहण गर्नु आवश्यक हुनेछ ।

**क्रियायोगको दोस्रो अवस्था-** धारणालाई कसरी ध्यानमा convert गर्ने ? किनकि ध्यान आवश्यक छ र रोगरहित जीवन प्राप्त गरेपछि मात्र ध्यान लाग्न सक्छ । यदि हातमा चोट लागेको छ भने अवश्य पनि दुख्ला । यस्तो अवस्थामा ध्यान लाउन सकिंदैन । यदि तपाइँकी श्रीमती बिरामी छ र तपाईं ध्यानमग्न हुन चाहनुहुन्छ भने ध्यान लाग्न सक्दैन । तसर्थ यी सम्पूर्ण रोगहरू, सम्पूर्ण चिन्ताहरूलाई मेटाउन संगुफन प्रयोग आवश्यक छ । क्रमश:

जय गुरुदेव !

# श्वास तथा ॐकार ध्यान विधि

ध्यान चर्चा

**धारावाहिक अभ्यास भाग ३**

**तेस्रो विधि (श्वास तथा ॐकार विधि)**

ध्यानको तेस्रो विधिमा पहिलो विधि र दोस्रो विधिको मिश्रण गरिएको छ । यस विधिमा अगाडिका दुवै विधिको संयुक्तरूपमा अभ्यास गरिन्छ ।

श्वासप्रश्वासको माध्यमबाट नै हाम्रो शरीरका विभिन्न अङ्ग-प्रत्यङ्गमा अक्सिजन पुऱ्याउन सम्भव हुन्छ । अक्सिजनले हाम्रो शरीरमा भएका कोषहरू (Cells) लाई पुनर्जीवन प्रदान गर्दछ, जसको कारण तपाईं हामीलाई समेत शान्ति र आनन्द प्राप्त हुन्छ ।

हाम्रो शरीर आफैमा स्वचालित मेसिनजस्तो छ, हामीले चाहेर नचाहेरभन्दा पनि आफसेआफ सबै प्रक्रियाहरू भइराखेका हुन्छन् । प्रत्येक अङ्गले आ-आफ्नै कार्य स्वचालितजस्तै रूपमा गर्ने गरेको पाइन्छ । नाकका दुवै प्वालहरूबाट पनि अटोमेटिकरूपमा कुनै बेला दायाँबाट श्वास लिने कार्य हुन्छ भने कुनै बेला बायाँबाट । त्यस्तै कुनै बेला दुवै नाकका प्वालहरू खुली श्वासप्रश्वास भएको हुन्छ । यसरी श्वास

लिने, फाल्ने कार्य पनि आफ्नै गतिमा भएको पाइन्छ ।

हाम्रो शरीरमा तीनवटा नाडीहरू रहेका छन्– दायाँतिर पिंगला नाडी, बायाँतिर इडा र बीचमा सुषुम्ना । यसरी तीनवटा नाडी आ-आफ्नै रूपमा क्रियाशील भइराखेका हुन्छन् । दायाँ र बायाँबाट पालैपालो श्वास लिने र फाल्ने गर्दा यी नाडीहरूमा पनि क्रियाशीलता बढ्दछ जसले गर्दा हामीभित्र अवस्थित चक्रहरू पनि जागृत हुन थाल्दछन् ।

त्यस्तै ॐकारको उच्चारणले हामीभित्र रहेको नाभी चक्र, हृदय चक्र एवं सहस्रार (शिर) चक्र पनि क्रियाशील हुन थाल्दछ, शान्ति र आनन्द प्राप्त हुन थाल्दछ ।

**तरीका** :

१. अनुकूल मिल्ने वस्त्र लगाउने, भएमा सल, मालाहरू लगाउने ।

२. धेरै समय बस्दा अप्ठ्यारो लाग्ने आसनमा नबसी सजिलो लाग्ने, अनुकूल हुने सुखासन, अर्धपद्मासन वा अन्य आसनमा बस्न सकिनेछ ।

३. आफ्नो अगाडि गुरुहरूको फोटो वा आफूले मानीआएका देवीदेवता वा इष्टहरूको फोटो राख्ने, अगरबत्ती बाल्ने, अनुकूल भए दीयो बाल्ने ।

४. सहस्रारमा परमपूज्य सद्गुरुदेवहरू श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजलाई गुरुरूपमा धारण गर्ने, हृदयमा आफूले मानेका देवीदेवताहरूलाई धारण गर्ने ।

५. तीनपटक ॐकार गर्ने र तलको श्लोक तीनपटक उच्चरण गर्ने-

'गुरुर्ब्रह्मा गुरुर्विष्णु: गुरुर्देवो महेश्वर:
गुरु: साक्षात् परब्रह्म तस्मै श्री गुरवे नम: ॥'

६. त्यसपछि दुवै हात रगडेर आँखा सेक्ने र आफ्नो अगाडि ढोगिदिने ।

७. ७/७ पटक देब्रेबाट सास नरोकिकन तान्ने फाल्ने, ७/७ पटक दाहिनेबाट सास नरोकिकन तान्ने र फाल्ने ।

८. २१ पटक ॐ उच्चारण गर्ने ।

९. आज्ञा चक्रमा ॐ सम्झेर ध्यान गर्ने । मन एकाग्र भए ॐकारमा ध्यान गर्ने, नभए श्वासमा ध्यान गर्ने ।

१०. आफ्नो अनुकूलताअनुसार १५ मिनेटदेखि ३०, ४५, ६० मिनेटसम्म गर्न सकिनेछ ।

११. तीनपटक ॐकार उच्चारण गर्ने ।

१२. तीनपटक तलको श्लोक उच्चारण गरेर भन्ने-

'गुरुर्ब्रह्मा गुरुर्विष्णु: गुरुर्देवो महेश्वर:
गुरु: साक्षात् परब्रह्म तस्मै श्री गुरवे नम: ॥'

१३. दुवै हात रगडेर शिरमा सेक्ने, आँखामा सेक्ने, घाँटीमा सेक्ने, छातीमा सेक्ने, नाभीमा सेक्ने, पुन: दुवै हात रगडेर आँखा सेक्ने, आफ्नो हत्केला हेर्दै अगाडि ढोगिदिने । ❑

## ध्यानको सफलताका सूत्रहरू

- गुरु एवं शास्त्रवचनमा पूर्ण विश्वास
- मन, इन्द्रियलाई सांसारीक विषयबाट हटाउनु
- विषयबाट विरक्त
- भगवद्चिन्तन, प्रार्थना
- एकान्तवास
- कम संग्रह
- राग, द्वेष, दुराग्रह नराख्ने, क्रोध नगर्ने
- चित्तको विषाद, अहंकार, इर्ष्या, हेय, आसक्ति, वैर, अभिमान, व्यर्थ चिन्तन आदिको त्याग
- धेरै नखाने
- न धेरै सुत्ने न धेरै जागा रहने
- मासु, मदिराको त्याग
- गाँजा चरेस नखाने
- धेरै तातो, पिरो, अमिलो, उत्तेजक पदार्थको त्याग
- मनमा सत्वगुणको प्रधानता गराउने
- रजोगुण/तमोगुणबाट सत्वगुणमा विकास गर्ने ।

# ध्यान! ध्यान!! ध्यान!!!

**तान्त्रिक ध्यानका प्रथम चरण, दोस्रो चरण, तेस्रो चरणका कक्षाहरू धमाधम सञ्चालन भइरहेका छन् । आजै नाम लेखाई आफ्नो स्थान सुरक्षित राख्नुहोला ।**

प्रथम चरण– **गोरक्ष निखिल वाणी पत्रिकाका सम्पूर्ण सदस्यहरुका लागि खुला ।** दोस्रो चरण– **प्रथम चरणको ध्यान सम्पन्न गरिसक्ने साधक साधिकाहरुका लागि ।** तेस्रो चरण– **दोस्रो चरणको ध्यान सम्पन्न गरिसक्ने साधक साधिकाहरुका लागि ।**

**बाँकी कुरा सिद्धाश्रम शक्ति केन्द्रका सम्पर्क कार्यालयहरुबाट बुझ्न सक्नुहुनेछ ।**

**हाल ध्यान सञ्चालन भइरहेका र निकट भविष्यमा हुने स्थानहरू–**

सम्पर्क कार्यालयहरु बसुन्धरा (काठमाडौँ), कटुञ्जे (भक्तपुर), लगनखेल (ललितपुर), बनेपा (काभ्रे), पोखरा रामघाट, विन्ध्यवासिनी, लेखनाथ बडहरे (कास्की), गोरखा बजार, लक्ष्मीबजार (गोरखा), बाह्रबिसे (सिन्धुपाल्चोक), तनहुँ ।

*यस स्तम्भअन्तर्गत हस्तरेखा विज्ञानअनुसार हस्तरेखासम्बन्धी जानकारीहरु पाठकवर्गसमक्ष राख्दै आइरहेका छौँ । आशा छ, यसबाट यहाँहरु लाभान्वित हुनुहुनेछ ।*

# आफ्नो हात आफै हेरौँ

## जीवन रेखा

जीवन रेखा मात्रै यस्तो रेखा हो जुन प्रत्येक मानिसको हत्केलामा पाइन्छ । यदि कसैको हत्केलामा यो रेखा देखिँदैन भने बुझ्नुपर्दछ कि यस्तो मानिसको व्यक्तित्व शून्यवत् हुन्छ र त्यस्तो मानिसमा जीवनशक्ति सर्वथा लोप भएको हुन्छ । यस्तो व्यक्तिको जीवन कुनै पनि समय समाप्त हुन सक्छ । कैयौँपटक मंगल रेखाले यस रेखालाई बल दिएको पाइन्छ, कहिलेकाहीँ शनि रेखाले पनि यस रेखालाई बल दिएको देखिन्छ । तर पनि जुन जीवन रेखा निर्दोष र स्पष्ट छ, त्यही रेखा मानिसका लागि वास्तवमा कल्याणकारी मानिन्छ ।

यसै रेखाबाट व्यक्तिको आयुको सम्बन्धमा थाहा हुन्छ । यस रेखाको माध्यमबाट यो थाहा हुन्छ कि जीवनमा कुन कुन  दुर्घटना कहिले घट्छ हुन्छ । मृत्युको कारण र यसको समय पनि यसै रेखाबाट ज्ञात हुन्छ ।

यो रेखा वृहस्पति पर्वतको मुनिबाट निस्केको देखिन्छ भने कहिलेकाहीँ वृहस्पति पर्वतको माथिबाट पनि निस्किएको पाइन्छ । यस रेखाको बारेमा यो ध्यान दिनु अत्यन्तै आवश्यक छ– जति ठूलो रूपमा यस रेखाले शुक्र पर्वतलाई घेर्दछ त्यति नै बढी यस रेखालाई श्रेष्ठ मानिन्छ । कैयौँपटक त यस रेखाले शुक्र पर्वतलाई अत्यन्तै संकीर्ण बनाइदिन्छ । जब हत्केलामा यस्तो अवस्था देखिन्छ तब यो बुझ्नुपर्दछ कि यस्तो व्यक्तिको प्रगति उसको जीवनमा कठीन नै हुन्छ । साथसाथै यस्तो व्यक्तिको जीवनमा प्रेम, भोग, सुखादि सांसारीक गुणहरूको न्यूनता रहन्छ । बूढी औँलानजिक हुँदै यदि यो रेखा निस्केको छ भने त्यस्तो व्यक्तिको आयु अत्यन्तै थोरै हुन्छ ।

जीवन रेखा जति धेरै गहिरो र बिना टुटेको हुन्छ त्यति नै धेरै राम्रो मानिन्छ । यस्तो व्यक्तिको स्वास्थ्य उन्नत हुन्छ, उसको हृदयमा प्रेम र सौन्दर्यको भावना विकसित रहन्छ । तर जसको हत्केलामा यो रेखा काटिएको, फाटिएको वा टुटेको र अस्पष्ट देखिन्छ उसको जीवन दु:खमय, भावनाशून्य एवं दुर्घटनाले युक्त रहन्छ । यस्तो व्यक्ति चिडचिडे तथा प्रत्येक कुरामा क्रोधित हुने हुन्छ ।

यदि गुरु पर्वतमुनि जीवन रेखा र मस्तिष्क रेखा मिल्न जान्छन् भने यो शुभ मानिन्छ । यस्तो व्यक्ति परिश्रमी, सतर्क र योजनाबद्ध तरीकाले काम गर्ने हुन्छ । तर यदि यी दुवै रेखाको उद्गम बेग्लाबेग्लै छ भने व्यक्ति उन्मुक्त विचारका र आफ्नै धुनमा काम गर्ने हुन्छ । तर यदि कसैको हत्केलामा जीवन रेखा, मस्तिष्क रेखा र हृदय रेखा तीनै एकै स्थानमा निस्कन्छ भने यसलाई एउटा दुर्भाग्यपूर्ण प्रतीक मानिन्छ । यस्तो व्यक्तिको नि:सन्देह हत्या हुन्छ ।

जीवन रेखामा यदि बाङ्गाटिङ्गा रेखाहरू देखिन्छन् भने त्यस व्यक्तिको स्वास्थ्य कमजोर छ भन्ने बुझ्नुपर्दछ । यदि हृदय रेखा र जीवन रेखाबीच त्रिभुज बनेको छ भने यस्तो

व्यक्ति दमको रोगी हुन्छ ।

जीवन रेखाबाट यदि कुनै पातलो रेखा निस्केर गुरु पर्वततिर गएको छ भने त्यस व्यक्तिका इच्छा, भावना र महत्त्वाकांक्षाहरू आवश्यकताभन्दा धेरै हुन्छ र उसले ती इच्छाहरूलाई पूरा गर्न भगीरथ प्रयत्न गर्दछ । यदि यस रेखामा कुनै रेखा उठेको देखिन्छ भने त्यो व्यक्ति परिश्रमी र कर्मठ हुन्छ र आफ्नै प्रयत्नले भाग्यको निर्माण गर्दछ ।

यदि जीवन रेखाको प्रारम्भबाट नै ससँगै सहायक रेखा गएको छ भने यस्तो व्यक्ति सोचेर कार्य गर्ने, विवेकपूर्ण योजना बनाउने र चतुर र महत्त्वाकांक्षी हुन्छ । यस्तो व्यक्तिको जीवनमा केही पनि असम्भव हुँदैन ।

यदि जीवन रेखा जाँदाजाँदै अचानक बीचमा समाप्त हुन्छ भने यसले आकस्मिक मृत्युतिर संकेत गर्दछ । यदि जीवन रेखाबाट कुनै सहायक रेखा निस्केर चन्द्र पर्वततिर गएको छ भने त्यो व्यक्ति वृद्धावस्थामा बहुलाउँछ । यदि यस रेखामा शनि रेखा आएर मिल्दछ भने त्यो व्यक्ति प्रतिभावान् र तेजस्वी हुन्छ ।

जीवन रेखाको अन्तमा यदि कुनै प्रकारको कुनै विन्दु वा क्रस देखिन्छ भने त्यस व्यक्तिको मृत्यु अचानक हुन्छ । यदि जीवन रेखा अन्तमा गएर कैयौँ भागमा विभक्त हुन्छ भने यस्तो व्यक्ति वृद्धावस्थामा निश्चय नै क्षयरोगको शिकार हुन्छ ।

यससँग सम्बन्धित अन्य केही तथ्यहरू पनि स्पष्ट गरिन्छ–

१. छोटो रेखा– कम आयु, २. पहेँलो र चौडा रेखा– विमारी र विवादास्पद चरित्र, ३. रातो रेखा– हिँसाको भावना, ४. पातलो रेखा– आकस्मिक मृत्यु, ५. साङ्लोजस्तो रेखा– शारीरिक कोमलाता, ६. टुटेको रेखा– विमारी, ७. सिँढीसमानको रेखा– जीवरभरि रुग्णता, ८. वृहस्पति पर्वतको मुनि प्रारम्भ– उच्च सफलता, ९. मस्तिष्क रेखासँग मिलेको– विवेकपूर्ण जीवन, १०. जीवन, मस्तिष्क तथा हृदय रेखाको मिलन– दुर्भाग्यपूर्ण व्यक्ति, ११. धँसेको गहिरो रेखा– असहिष्टतापूर्ण व्यवहार, १२. स्वास्थ्य तथा मस्तिष्क रेखानजिक नक्षत्र– सन्तानहीनता, १३. स्पष्ट रेखा– न्यायपूर्ण जीवन, १४. प्रारम्भस्थलमा शाखा पुञ्ज– अस्थिर जीवन, १५. रेखाको मध्यमा शाखाहरू– क्षयपूर्ण जीवन, १६. अन्तमा शाखाहरू– दुःखदायी बुढापा, १७. अन्तमा दुई भागमा विभक्त– निर्धनतापूर्ण मृत्यु, १८. अन्तमा जाल– धन हानीपछि मृत्यु, १९. रेखाबाट माथितिर उठेका सहायक रेखा– आकस्मिक धन प्राप्ति, २०. रेखामा कालो धब्बा– रोगको प्रारम्भ, २१. तलतिर गएका सहायक रेखाहरू– स्वास्थ्य तथा धनको हानी, २२. मार्गमा रेखाहरू टुटेको हुनु– आर्थिक हानी, २३. कैयौँ स्थानमा काटेर रहेका रेखाहरू– स्थायी रोग, २४. रेखामा वृत्तको निशाना– हत्या, २५. प्रारम्भमा क्रस– दुर्घटनाबाट अङ्गभङ्ग, २६. रेखाको अन्तमा क्रस– असफल बुढ्यौली, २७. क्रसले काटिएको जीवन रेखा– मानसिक कमजोरी, २८. रेखाको प्रारम्भमा द्वीप– तन्त्र विद्यामा रुचि, २९. रेखाको मध्यमा द्वीप– शारीरिक कमजोरी, ३०. लहरदार जीवन रेखा र त्यसमा द्वीप– रोगी जीवन, ३१. जीवन रेखाबाट हत्केलापारि गएका रेखाहरू– कदम कदममा सफलता, ३३. शनि पर्वतमा गएका रेखाहरू– पशुबाट दुर्घटना एवं मृत्यु, ३४. सूर्य पर्वततिर गएका रेखाहरू– प्रसिद्धि र सम्मान, ३५. बुध पर्वततिर गएका रेखाहरू– अन्तर्राष्ट्रिय व्यापारमा सफलता , ३६. चन्द्र पर्वततिर गएका रेखाहरू– आवश्यकताभन्दा धेरै निर्धनता तथा रोगमय जीवन, ३७. निम्न मंगलतिर गएका रेखाहरू– क्रोधमा आत्महत्या, ३८. मंगल पर्वततिर गएका रेखाहरू– प्रेमको कारण युवावस्थामा बदनामी, ३९. शुक्र पर्वतको भित्रतिर गएका रेखाहरू– प्रेमभङ्ग, ४०. जीवन रेखाका कैयौँ स्थानमा काटेर बसेका रेखाहरू– पारिवारीक जीवनमा असफलता, ४१. जीवन रेखालाई काटेर भाग्य रेखासम्म जाने रेखा– व्यापारमा पूर्ण असफलता, ४२. जीवन रेखालाई काटेर मस्तिष्क रेखातिर गएका रेखाहरू– पागलपन, ४३. जीवन रेखालाई काटेर हृदय रेखातिर गएका रेखाहरू– हृदय रोगले पीडित, ४४. जीवन रेखा तथा हृदय रेखालाई काटेर बसेका रेखा– प्रेम कार्यहरूमा असफलता, ४५. हृदय रेखातिर जाने रेखाको अन्तमा द्वीप– दुःखपूर्ण वैवाहिक जीवन, ४६. जीवन रेखा र सूर्य रेखालाई काटेर बसेका रेखा– सामाजिक पतन, ४७. शुक्र पर्वत तथा जीवन रेखामा नक्षत्रको चिह्न– घरेलु झगडा, ४८. सूर्य रेखा तथा जीवन रेखामा नक्षत्र– दुःखमय घरेलु जीवन, ४९. मस्तिष्क रेखा, हृदय रेखा तथा जीवन रेखामा चिह्न– रोगपूर्ण जीवन, ५०. भाग्य रेखा तथा जीवनमा त्रिकोण– आर्थिक हानी, ५१. सूर्य रेखा तथा जीवन रेखामा त्रिकोण– अपराधपूर्ण जीवन ।

क्रमश: जय गुरुदेव !

# माघ महिनाको सूक्ष्म काल विवरण

**आदरणीय पाठकवृन्द, विभिन्न महिनाका विभिन्न बारहरुमा पर्ने कालहरुको जानकारी तथा सूक्ष्म काल निर्णयका सम्बन्धमा विगतका अङ्कहरूमा प्रकाशित गरिएको थियो । यस अंकमा माघ महिनामा पर्ने विभिन्न चारवटा कालहरुको पनि ५-५ मिनेटको अन्तरालको फलहरुलाई प्रस्तुत गरिएको छ जसलाई हेर्न सँगै दिइएको तालिकालाई आधार बनाउनु होला ।**

## माघ महिनाको महेन्द्र काल

१ देखि ५ मिनेटसम्म : शुभ कार्य एवं व्यापारका लागि सर्वथा अनुकूल छ । यस कालका स्वामी 'शिव' हुन्, कार्य प्रारम्भ गर्नुअघि धनियाँको सेवन अनुकूल हुन्छ ।

६ देखि १० मिनेटसम्म : चुनाव, परीक्षा, सफलतासम्बन्धी कार्य, स्थिर कार्य, भाग्योदयका लागि यस समयको चुनाव गर्नुपर्दछ । यस समयका स्वामी 'विष्णु' हुन्, चामल खाएर कार्य गर्नु विशेष शुभ मानिन्छ ।

११ देखि १५ मिनेटसम्म : कुनै पनि प्रकारको यात्रा एवं सफलताका लागि यो समय विशेष शुभ एवं अनुकूल छ । यस समयका देवता 'सूर्य' हुन्, शख्खर खाएर यात्रा प्रारम्भ गर्नुपर्दछ ।

१६ देखि २० मिनेटसम्म : यात्राको दृष्टिले यस समयको विशेष महत्त्व छ । यस समयका अधिष्ठाता 'गणेश' हुन्, गणेशको स्मरण गरेर यात्रा गर्नुपर्दछ । दूबोको चर्वण शुभ मानिन्छ ।

२१ देखि २५ मिनेटसम्म : यात्रा, द्युत कार्य, हानि-लाभ, सट्टा, भाग्य परीक्षा, मित्रता, लाभदायक कार्य आदिका लागि यो समय उचित छ । यस समयका स्वामी 'कार्तवीर्यार्जुन' हुन्, दहीको भक्षण शुभ मानिन्छ ।

२६ देखि ३० मिनेटसम्म : यात्रा, शुभ कार्य, सगाई, विवाह, मांगलिक कार्य, व्यापारिक कार्य, द्युत आदिका लागि यो समय शुभ छ । यस समयका देवता 'चन्द्र' हुन्, दहीको भक्षण शुभ मानिन्छ ।

३१ देखि ३५ मिनेटसम्म : व्यापार कार्यका लागि यस समयको चुनाव गर्नु विशेष शुभ छ । यस समयका देवी 'लक्ष्मी' हुन्, दूध-प्रसाद भक्षण गरेर कार्य प्रारम्भ गर्नु विशेष शुभ मानिन्छ ।

३६ देखि ४० मिनेटसम्म : उन्नति कार्य, विवाह, प्रणय, प्रेम-प्रदर्शन, लाभ कार्य, खेल, यात्रा आदिका लागि यो समय शुभ छ । यस समयका अधिष्ठाता देवता 'कामदेव' हुन्, मह खाएर कार्य प्रारम्भ गर्दा विशेष शुभ हुन्छ ।

४१ देखि ४५ मिनेटसम्म : कुनै पनि प्रकारको उन्नति, व्यापार, नोकरी, यात्रा आदिका लागि यो समयको चुनाव गर्नु शुभ मानिन्छ । यस समयकी देवी 'गौरी' हुन्, हरिद्रा भक्षण शुभ मानिन्छ ।

४६ देखि ५० मिनेटसम्म : यात्रा, विजय कार्य, धन संग्रह, खरिदारी र शुभ कार्यका लागि यो समय अनुकूल छ । यस समयका अधिष्ठाता 'ब्रह्मा' हुन्, पान खाएर कार्य प्रारम्भ गर्नु शुभ मानिन्छ ।

५१ देखि ५५ मिनेटसम्म : यात्रा, विवाह, व्यापार कार्य, मित्रता, उन्नति कार्य आदिका लागि यस समयको चुनाव गर्नुपर्दछ । यस समयका अधिष्ठाता 'मरुत्' हुन्, तिलको भक्षण शुभ मानिन्छ ।

५६ देखि ६० मिनेटसम्म : व्यापार, सफलता, शिक्षा, खेल, प्रणय-प्रसंग, विवाह, यात्रा आदिका लागि यस समयको चुनाव गर्नुपर्दछ । यस समयका देवता 'गौतम' हुन्, कार्य प्रारम्भ गर्नु अघि पान खानु शुभ मानिन्छ ।

## माघ महिनाको अमृत काल

१ देखि ५ मिनेटसम्म : द्युत कार्य, व्यापार, व्यवसायका लागि यात्रा, यज्ञ, पूजन, अनुष्ठानका आदिका लागि यो समय शुभ छ । यस समयका देवता 'शिव' हुन्, चामल खाएर कार्य प्रारम्भ गर्नु शुभ हुन्छ ।

६ देखि १० मिनेटसम्म : यात्रा, महत्त्वपूर्ण र उन्नति कार्यहरूका लागि यो समयको चुनाव छ । यस समयका देवता 'रुद्र' हुन्, चाकु खाएर कार्य प्रारम्भ गर्नु शुभ मानिन्छ ।

११ देखि १५ मिनेटसम्म : यात्रादिका लागि सर्वाधिक उपयुक्त समय छ । यस कालका देवी 'सरस्वती' हुन्, मुगीको दाना चपाएर यात्रा प्रारम्भ गर्नु शुभ मानिन्छ ।

१६ देखि २० मिनेटसम्म : परीक्षा, चुनाव, अन्तरवार्ता, ज्योइनिंग तथा यात्रादिका लागि यो सयम शुभ छ । यस समयका अधिष्ठाता 'चन्द्र' हुन्, दही भक्षण शुभ मानिन्छ ।

२१ देखि २५ मिनेटसम्म : कुनै पनि प्रकारको कार्यको लागि यो शुभ समय हो । यसका देवता 'नृसिंह' हुन्, लड्डु

# चैत्र, वैशाख, श्रावण, भाद्र, माघ र फाल्गुण महिनामा पर्ने विभिन्न कालहरू

| आइतबार | | सोमबार | | मंगलबार | | बुधबार | | बिहीबार | | शुक्रबार | | शनिबार | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| ***समय*** | ***काल*** | ***समय*** | ***काल*** | ***समय*** | ***काल*** | ***समय*** | ***काल*** | ***समय*** | ***काल*** | ***समय*** | ***काल*** | ***समय*** | ***काल*** |
| ६:००-६:४८दिन | महेन्द्र | ६:००-७:३६दिन<br>*७:३०-९:००* | अमृत<br>*राहु* | ६:००-८:२४दिन | अमृत | ६:००-७:३६दिन | वक्र | ६:००-८:२४दिन | अमृत | ६:००-६:४८दिन | शून्य | ६:००-७:३६दिन | शून्य |
| ६:४८-१०:०० | अमृत | ७:३६-१०:४८<br>*७:३०-९:००* | वक्र<br>*राहु* | ८:२४-९:१२ | शून्य | ७:३६-९:१२ | अमृत | ८:२४-९:१२ | शून्य | ६:४८-१:१२<br>*१०:३०-१२:००* | अमृत<br>*राहु* | ७:३६-८:२४ | वक्र |
| १०:००-२:०० | वक्र | १०:४८-१:१२ | अमृत | ९:१२-१०:०० | वक्र | ९:१२-११:३६ | वक्र | ९:१२-१०:४८ | शून्य | १:१२-४:२४ | वक्र | ८:२४-९:१२<br>*९:००-१०:३०* | शून्य<br>*राहु* |
| २:००-५:१२<br>*४:३०-६:००* | शून्य<br>*राहु* | १:१२-३:३६ | वक्र | १०:००-१२:२४ | अमृत | ११:३६-१:१२<br>*१२:००-१:३०* | अमृत<br>*राहु* | १०:४८-१:१२ | अमृत | ४:२४-५:१२ | अमृत | ९:१२-१२:२४<br>*९:००-१०:३०* | अमृत<br>*राहु* |
| ५:१२-६:००<br>*४:३०-६:००* | अमृत<br>*राहु* | ३:३६-५:१२ | अमृत | १२:२४-३:३६<br>*३:००-४:३०* | शून्य<br>*राहु* | १:१२-२:००<br>*१२:००-१:३०* | शून्य<br>*राहु* | १:१२-४:२४<br>*१:३०-३:००* | वक्र<br>*राहु* | ५:१२-६:०० | शून्य | १२:२४-१:१२ | शून्य |
| ६:००-६:४८रात्रि | शून्य | ५:१२-६:०० | शून्य | ३:३६-५:१२<br>*३:००-४:३०* | अमृत<br>*राहु* | २:००-३:३६ | वक्र | ४:२४-६:०० | अमृत | ६:००-७:३६रात्रि | वक्र | १:१२-२:०० | वक्र |
| ६:४८-७:३६ | महेन्द्र | ६:००-७:३६रात्रि | वक्र | ५:१२-६:०० | शून्य | ३:३६-४:२४ | महेन्द्र | ६:००-७:३६रात्रि | वक्र | ७:३६-८:२४ | शून्य | २:००-३:३६ | शून्य |
| ७:३६-८:२४ | शून्य | ७:३६-९:१२ | महेन्द्र | ६:००-७:३६रात्रि | वक्र | ४:२४-६:०० | अमृत | ७:३६-९:१२ | महेन्द्र | ८:२४-१०:४८ | अमृत | ३:३६-५:१२ | अमृत |
| ८:२४-१०:०० | अमृत | ९:१२-१०:०० | अमृत | ७:३६-९:१२ | महेन्द्र | ६:००-६:४८रात्रि | शून्य | ९:१२-१०:०० | अमृत | १०:४८-१:१२ | वक्र | ५:१२-६:०० | शून्य |
| १०:००-१०:४८ | शून्य | १०:००-१:१२ | वक्र | ९:१२-१०:०० | अमृत | ६:४८-९:१२ | अमृत | १०:००-१:१२ | वक्र | १:१२-३:३६ | महेन्द्र | ६:००-८:२४रात्रि | वक्र |
| १०:४८-१:१२ | वक्र | १:१२-२:४८ | अमृत | १०:००-१२:२४ | वक्र | ९:१२-१०:४८ | महेन्द्र | १:१२-२:४८ | अमृत | ३:३६-४:२४ | शून्य | ८:२४-१०:४८ | अमृत |
| १:१२-३:३६ | शून्य | २:४८-४:२४ | शून्य | १२:२४-२:०० | अमृत | १०:४८-१२:२४ | वक्र | २:४८-४:२४ | शून्य | ४:२४-६:०० | अमृत | १०:४८-१२:२४ | वक्र |
| ३:३६-४:२४ | महेन्द्र | ४:२४-५:१२ | वक्र | २:००-२:४८ | शून्य | १२:२४-२:०० | शून्य | ४:२४-६:०० | अमृत | | | १२:२४-२:०० | शून्य |
| ४:२४-६:०० | अमृत | ५:१२-६:०० | शून्य | २:४८-३:३६ | वक्र | २:००-६:०० | अमृत | | | | | २:००-३:३६ | अमृत |
| | | | | ३:३६-४:२४ | महेन्द्र | | | | | | | ३:३६-४:२४ | शून्य |
| | | | | ४:२४-६:०० | अमृत | | | | | | | ४:२४-६:०० | अमृत |

परमपूज्य सद्‌गुरुदेव डा. नारायणदत्त श्रीमाली (परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज) द्वारा रचित *'ज्योतिष और काल निर्णय'* पुस्तकमा आधारित ।

**महेन्द्रकाल– सर्वश्रेष्ठ, अमृतकाल– श्रेष्ठ, वक्रकाल– सामान्य, शून्यकाल– निकृष्ट । शुभकालमा राहुकाल पनि मिसिएको छ भने त्यो समय पनि आफैँ अशुभ हुन्छ ।**

सूक्ष्म काल विवेचना गर्नुपर्दा– सर्वप्रथम कुन बार हो र कति बजेको विवेचना गर्नु छ, त्यसअनुसार कुन काल परेको छ (महेन्द्रकाल, अमृतकाल, वक्रकाल वा शून्यकाल) त्यो तालिका हेरेर पत्ता लगाउनु पर्दछ । उदाहरणका लागि २०६६ माघ २६ गते मंगलबार बिहान ७:१३ बजेको सूक्ष्म विवेचना गरौँ । मंगलबार प्रात: ६:०० देखि ८:२४ बजेसम्म अमृतकालको समय छ । हाम्रो समय अमृतकालमा परेको छ । अब हाम्रो समय ७:१३ बाट हाम्रो काल शुरु भएको समय ६:०० घटाऔँ । बाँकी रह्यो १:१३ अर्थात् १ घण्टा १३ मिनेट । अब घण्टा जति भए पनि त्यसलाई छोडिदिएर मिनेटमा मात्र विचार गर्नुहोस्- १३ मिनेट । त्यसपछि माघ महिनाको अमृतकालमा १३ मिनेट कहाँ पर्दछ हेर्नुहोस् । त्यहाँ लेखिएको छ– **११ देखि १५ मिनेटसम्म : व्यात्रादिका लागि सर्वाधिक उपयुक्त समय छ । यस कालका देवी 'सरस्वती' हुन्, मुगीको दाना चपाएर यात्रा प्रारम्भ गर्नु शुभ मानिन्छ ।** अब यहाँ लेखिएअनुसार गर्न सक्नुहुनेछ ।

प्रयोग गरेर कार्य प्रारम्भ गर्नु शुभ मानिन्छ ।

२६ देखि ३० मिनेटसम्म : द्युत कार्य, व्यापार, यात्रा आदिका लागि यो समय उपयुक्त छ । यस समयका देव 'शनि' हुन्, तिलको भक्षण गरेर कार्य प्रारम्भ गर्नु शुभ मानिन्छ ।

३१ देखि ३५ मिनेटसम्म : यात्राका लागि यो समय शुभ छ । यस समयका देवता 'गणपति' हुन्, चाकुको भक्षण गरेर कार्य प्रारम्भ गर्नु शुभ मानिन्छ ।

३६ देखि ४० मिनेटसम्म : द्युत कार्य, व्यापार प्रारम्भ गर्नु, कुनै पनि घर वा पसलको मुहूर्त आदिका लागि यो समय शुभ छ । यस समयका देवता 'विष्णु' हुन्, शख्खर खानु शुभ छ ।

४१ देखि ४५ मिनेटसम्म : यात्रा, व्यापार, उन्नति कार्य एवं समस्त शुभ कार्यका लागि यस समयको चुनाव गर्नु शुभ हो । यस समयका प्रधान देव 'विष्णु' हुन्, मीठो पकवान भक्षण शुभ मानिन्छ ।

४६ देखि ५० मिनेटसम्म : विवाह आदिका लागि प्रस्थान, अन्तरवार्ता, मुद्दा-मामिला आदिका लागि यो समय शुभ मानिन्छ । यस समयका अधिष्ठाता देव 'हनुमान्' हुन्, चाकुको भक्षण गरेर कार्य प्रारम्भ गर्नु शुभ मानिन्छ ।

५१ देखि ५५ मिनेटसम्म : यात्रा, स्थायित्वसम्बन्धी कार्य, व्यापार प्रारम्भ, मुहूर्त आदिका लागि यो समयको चुनाव शुभ छ । यस समयकी देवी 'लक्ष्मी' हुन्, दूध-प्रसाद भक्षण गरेर कार्य प्रारम्भ गर्नु शुभ मानिन्छ ।

५६ देखि ६० मिनेटसम्म : स्थायी कार्य एवं व्यापार, उन्नति तथा यात्रादिका लागि यो शुभ समय हो । यसका अधिष्ठात्री देवी 'गौरी' हुन्, दूबो खानु शुभ मानिन्छ ।

### माघ महिनाको वक्र काल

१ देखि ५ मिनेटसम्म : जासूसी, भेद ज्ञान गर्नु, सामुन्नेका व्यक्तिलाई प्रभावित गर्नु आदिका लागि यो समय ठीक छ । यस समयका प्रधान देव 'वात' हुन्, चामल खाएर यात्रा गर्नुपर्दछ ।

६ देखि १० मिनेटसम्म : व्यापारिक कार्यहरूका लागि यो समय शुभ छ । यस समयका प्रधान देव 'गुरु' हुन्, बेसनबाट बनाइएका मिठाइको प्रयोग शुभ मानिन्छ ।

११ देखि १५ मिनेटसम्म : प्रेम-प्रदर्शन, प्रणय आदिका लागि यो समयको चुनाव ठीक रहन्छ । यस समयका प्रधान देव 'कामदेव' हुन्, मह भक्षण गरेर हिँड्नु शुभ छ ।

१६ देखि २० मिनेटसम्म : यात्रादिका लागि यो समय अनुकूल छ । 'मरुत्' यस समयका प्रधान देव हुन्, चाकुको भक्षण गरेर यात्रारम्भ शुभ मानिन्छ ।

२१ देखि २५ मिनेटसम्म : प्रेम, वाद्य, द्युत आदिका लागि शुभ समय हो । यस समयका प्रधान देव 'पुष्पधन्वा' हुन्, महको सेवन शुभ मानिन्छ ।

२६ देखि ३० मिनेटसम्म : द्युत कार्यका लागि उपयुक्त समय हो । यस समयका प्रधान देव 'वरुण' हुन्, दही खाएर यात्रा गर्नुपर्दछ ।

३१ देखि ३५ मिनेटसम्म : मित्रता बढाउने, अधिकार प्राप्त गर्ने, स्थानान्तरण आदिका लागि यो समय उपयुक्त छ । यस समयका प्रधान देव 'सूर्य' हुन्, जीराको भक्षण शुभ मानिन्छ ।

३६ देखि ४० मिनेटसम्म : जुवा, दौड, चलचित्र, व्यापार आदिका लागि यो उपयुक्त समय हो । यसका प्रधान देव 'शुक्राचार्य' हुन्, मीठो पकवान खाएर कार्य प्रारम्भ गर्नु शुभ हुन्छ ।

४१ देखि ४५ मिनेटसम्म : व्यापार आदिका लागि यो समय अपेक्षाकृत ठीक छ । प्रारम्भमा विलम्भ भए पनि पछि सिद्धि मिल्छ । यस समयका प्रधान देव 'गरुड' हुन्, हरिद्रा भक्षण गरेर कार्य प्रारम्भ गर्नु शुभ रहन्छ ।

४६ देखि ५० मिनेटसम्म : यात्राका लागि आरम्भमा केही बाधाकारक भए पनि अन्तमा ठीक छ । यसका प्रधान देव 'अग्नि' हुन्, सर्स्यूँ चपाएर कार्य प्रारम्भ गर्नु उत्तम मानिन्छ ।

५१ देखि ५५ मिनेटसम्म : व्यापार, व्यवसायका लागि सामान्यरूपमा अनुकूल छ । यस समयका प्रधान देव 'चन्द्रमा' हुन्, दही भक्षण शुभ मानिन्छ ।

५६ देखि ६० मिनेटसम्म : यात्रा आदिका लागि यो समय विशेष अनुकूल छ । यस समयका प्रधान देव 'गणपति' हुन्, चाकुको भक्षण शुभ मानिन्छ ।

## माघ महिनाको शून्य काल

१ देखि ५ मिनेटसम्म : बाधाकारक समय, तर मुद्दा-मामिलाका लागि शुभ । यस समयका देवता 'हनुमान' हुन्, चाकु, घिउ खाएर यात्रा गर्दा अनुकूल ।

६ देखि १० मिनेटसम्म : प्रत्येक कार्यका लागि सामान्य अनुकूल छ । यस समयका प्रधान देवता 'मकरध्वज' हुन्, तोरीको चर्वण शुभ ।

११ देखि १५ मिनेटसम्म : द्युत कार्यका लागि शुभ । यस समयका देवता 'काल' हुन्, मह भक्षण गरेर हिँड्नु अनुकूल छ ।

१६ देखि २० मिनेटसम्म : द्युत, मद्य, घोडादौड, सौन्दर्यप्रशाधन सामग्रीको विक्रय, व्यापार आदिका लागि अनुकूल । यसका प्रधान देवता 'विश्वकर्मा' हुन्, चाकु, घिउको भक्षण शुभ मानिन्छ ।

२१ देखि २५ मिनेटसम्म : शुभ, यात्रादिका लागि अनुकूल । यस समयका प्रधान देवता 'ब्रह्मा' हुन्, दहीको सेवन शुभ मानिन्छ ।

२६ देखि ३० मिनेटसम्म : कार्यको प्रारम्भमा तनाव तर पछि स्थितिमा सुधार । प्रधान देव 'अग्नि'को स्मरण र तिलको भक्षण शुभ ।

३१ देखि ३५ मिनेटसम्म : प्रणय-प्रसंग, मद्यपान, जुवा, घोडादौड आदिका लागि अनुकूल। यस समयका प्रधान देवता 'शुक्राचार्य' हुन्, फलको सेवन गरेर हिँड्नुपर्दछ ।

३६ देखि ४० मिनेटसम्म : प्रत्येक कार्य वा यात्रादिका लागि प्रारम्भमा बाधाकारक तर पछि शुभ । यसका प्रधान देवी 'लक्ष्मी' हुन्, चामल भक्षण शुभ ।

४१ देखि ४५ मिनेटसम्म : प्रत्येक कार्यका लागि अशुभ एवं परेशानीपूर्ण, तर पनि 'गणपति'को स्मरण र चाकु खाएर कार्य प्रारम्भ गर्दा शुभ ।

४६ देखि ५० मिनेटसम्म : प्रत्येक कार्य व्यवधानपूर्ण छ, तर पनि 'गौरी'को स्मरण र दहीको भक्षणपछि कार्य प्रारम्भ गर्नाले केही अनुकूलता ।

५१ देखि ५५ मिनेटसम्म : यात्रादिका लागि विपरीत समय, शुभ कार्यहरूमा वर्जित, प्रधान देवता 'चित्रगुप्त'को स्मरण र फूलको भक्षण गरेर कार्यको प्रारम्भ गर्दा केही अनुकूलता ।

५६ देखि ६० मिनेटसम्म : प्रत्येक कार्यका लागि अशुभ एवं बाधाकारक, तर 'हिडिम्बा'को स्मरण र घृत भक्षण शुभ छ । जय गुरुदेव !

## हार्दिक श्रद्धाञ्जलि

जन्म — स्वर्गारोहण

१९९० फाल्गुण २९ **स्व. गणेशकुमार श्रेष्ठ** २०६६ मंसिर ७

साधिका सुशीला श्रेष्ठका ससुरा गणेशकुमार श्रेष्ठको ४५ औं दिनको पुण्यतिथिमा मृतात्माको चिर शान्तिका लागि परमपूज्य सद्गुरुदेवहरूको चरणकमलमा भावपूर्ण प्रार्थना गर्दै शोक सन्तप्त परिवारजनप्रति हार्दिक समवेदना व्यक्त गर्दछौं ।

**सिद्धाश्रम शक्ति केन्द्र**
**सम्पर्क कार्यालय गोरखा बसपार्क**

मन्त्र तन्त्र यन्त्र विज्ञानसम्बन्धी
नेपालकै पहिलो रेडियो कार्यक्रम

# गोरक्ष निखिल सन्देश

gnsandesh@ssk.org.np

| स्थान | समय (बिहान) | स्टेशन | मेगाहर्ज |
|---|---|---|---|
| पोखरा | सोमबार ५:०५–५:४५ | माछापुच्छ्रे FM | ९१ |
| चितवन | सोमबार ५:००–५:४० | कालिका FM | ९५.२ |
| धनगढी | सोमबार ५:३०–६:०० | दिनेश FM | ९३.८ |
| सुर्खेत | सोमबार ५:१५–५:४५ | रेडियो भेरी FM | ९८.६ |
| गोरखा | सोमबार ५:००–५:३० | रेडियो गोरखा FM | ९२.८ |
| भैरहवा | बिहीबार ५:००–५:४५ | रूपन्देही FM | १०२ |
| दाङ घोराही | बिहीबार ५:३०–६:०० | रेडियो मध्यपश्चिम FM | ९१.४ |
| पाल्पा | बिहीबार ५:००–५:३० | रेडियो मुक्तिनाथ FM | ९०.८ |
| सिन्धुली | बिहीबार ५:००–५:३० | सिन्धुलीगढी FM | १०३.६ |
| दाङ लमही | शुक्रबार ५:३०–६:०० | रेडियो देउखुरी FM | १०५.८ |
| पोखरा | बिहीबार ५:३०–६:०० | रेडियो सराङ्कोट FM | १०४.६ |
| दमौली | बिहीबार ५:२५–५:५५ | दमौली FM | ९४.२ |
| कोहलपुर | बिहीबार ५:३०–६:०० | कोहलपुर FM | १००.२ |
| चितवन | सोमबार ५:००–५:४० | त्रिवेणी FM | १००.६ |
| दमौली | बुधबार ५:०५–५:३५ | मादीसेती FM | १०५.८ |
| सल्यान | बिहीबार ५:००–५:३० | रेडियो सल्यान FM | १०१ |
| दमौली | बुधबार ५:१०–५:३० | रेडियो तनहूँ FM | ९७.२ |

# योग मुद्रासन (Psychic Union Pose)

साँच्चै नै चार्ल्स डार्बिनको बाँच्नका लागि संघर्ष (Struggle for existence) भन्ने सिद्धान्त अत्यन्त सान्दर्भिक र व्यवहृत भएको पाइन्छ । सरसर्ती हेर्ने हो भने बाँच्नको लागि बोटविरुवा, अन्य प्राणीलगायत सम्पूर्ण मानवलाई नै आज संघर्ष गर्न परिरहेको छ । तपाईं पनि अलि कमजोर बन्नुहोस्, अलि ठूलो रोगले समातोस्, आर्थिक स्थिति कमजोर हुँदै जाओस्, यथेष्ट कमाउन नसक्नुहोस् त बाटोको कुकुरले पनि हेप्न थाल्छ, आफ्नै बाबुआमा, सन्तान, श्रीमती र आफन्तले हेयको दृष्टिले हेर्न थाल्छन् भने अरूको त के कुरा ? तपाईं बाँचेर पनि पलपल मरिरहेको अनुभव गर्नुहुन्छ । आफ्नो लास आफ्नै काँधमाथि बोकेर हिँडेको र आफ्नो जीवन आफैलाई बोझ लाग्न लागेको प्रतीत हुन्छ । अनि गर्नु परेन त बाँच्नका लागि संघर्ष ?

यस्ता कुरा त जसलाई चोट लाग्यो उसले भोग्ने हो, उसले बुझ्ने हो । हजारौँलाई यस्ता चोट लागिरहेको हुन्छ तापनि निराकरणका लागि भने नगण्य व्यक्तिले मात्र मार्ग पाइरहेका हुन्छन् । जहाँ मानिस कमजोर हुन्छ, शक्तिहीन हुन्छ त्यहाँ उसले आफ्नो मान, सम्मान, लाज, इज्जत सबै नै गुमाउनुपर्ने हुन्छ । चाहे करोडपति होस् या राजा नै किन नहोस्, यदि शक्तिहीन छन् भने त्यहाँ ती पद हुनु र नहुनुको कुनै अर्थ रहँदैन । त्यसैले विश्वामित्रले रामलाई पहिले शक्तिशाली बन्नुपर्ने बाटो देखाउनुभयो, सान्दीपनले कृष्णलाई शक्तिशाली बन्ने साधना सिकाउनुभयो तब उहाँहरूले जीवनको कुनै मोडमा पनि हार खानु परेन । लोकमा शानका साथ बाँच्न र अध्यात्मको सन्देश दिन सफल हुनुभयो । त्यो शक्तिशाली बन्ने कुनै उपाय थियो भने त्यो आध्यात्मिक शक्ति थियो, योग शक्ति थियो ।

आजसम्मको सबैभन्दा ठूलो साम्राज्याधिपति सिकन्दर महान् जसका कैयौँ सुन्दरी श्रीमती थिए, सैन्य बल, सम्पत्ति र वैभवको कुनै लेखाजोखा थिएन, त्यस्ता राजाले त मर्ने बेलामा आफ्नो जीवन अर्थहीनरूपमा व्यतीत भएको स्वीकार गरेका थिए भने अन्य सामान्यजनको के नै कुरा भयो र ? नश्वर तन, जन र धनको आडमा कोही पनि शक्तिशाली बन्न सक्दैन । क्षणिकरूपमा बाहिर बाहिर शक्तिशाली भएको अनुभव हुनसक्छ तर आन्तरिक ओज हुन सक्दैन । त्यसैले संसारमा शक्तिशाली बन्ने एउटै मात्र विधा छ– त्यो हो अध्यात्म । जसले आन्तरिक तथा बाह्य दुवै ऊर्जा प्रदान गर्न सक्दछ । जसबाट इहलौकिक र पारलौकिक सुख प्राप्त गर्न सकिन्छ । अल्पकालीन तथा दीर्घकालीन वेदनाहरू समाप्त गर्न सकिन्छ । अध्यात्ममार्गमा अपरिहार्य परमतत्त्व सद्‌गुरु हुनुहुन्छ । सद्‌गुरुबाट प्राप्त तन्त्र, मन्त्र, ध्यान, योग, हवन, पूजन आदि विधाहरू नै शक्ति प्राप्त गर्ने साधन हुन् । तिनै विधाहरूमध्ये योग पनि शक्ति प्राप्त गर्ने, वेदना नाश गर्ने एउटा सशक्त माध्यम हो । जसको विविध पक्षहरूको बारेमा पाठकहरूलाई हामीले यस पत्रिका मार्फत् जानकारी दिने प्रयास गरिरहेका छौँ । आउनुहोस् अब यस अङ्कमा योगमुद्रासनको बारेमा केही चर्चा गरौँ ।

**आसन गर्ने विधि-**

- पद्‌मासनमा बसेर आँखा बन्द गर्ने ।
- श्वासप्रश्वासको गतिलाई सामान्य राखेर शरीरलाई खुकुलो छोडिदिने ।
- एउटा हातलाई मुठ्ठी पारेर पछाडि लाने र अर्को हातलाई पनि पछाडि लगेर मुठ्ठी परेको हातको नाडी समाउने ।
- गहिरो श्वास लिने ।
- श्वासलाई बाहिर फाल्दै ढाडलाई सीधा राखी अगाडितिर निहुरिने ।
- आफूलाई सजिलो हुन्जेलसम्म अगाडि झुक्ने, सकेसम्म टाउकोले भुइँ छुने प्रयास गर्ने । यदि सकिएन भने जति सक्यो त्यति अगाडि झुक्ने ।
- शरीरलाई खुकुलो पार्दै बिस्तारै गहिरो श्वास लिने । कुर्कुच्चाले पेटमा परेको दवाबमा ध्यान दिने ।
- यस स्थितिमा आफूलाई सजिलो लागुन्जेलसम्म बस्ने ।
- बिस्तारै श्वास लिँदै पहिलेको अवस्थमा आउने ।
- अब पद्‌मासनमा खुट्टा बदली गरेर पुनः यो आसनलाई दोहोऱ्याउने ।

**श्वासप्रश्वासको स्थिति :**

- शुरुको स्थितिमा बिस्तारै गहिरो श्वास लिने ।
- अगाडि निहुरिँदा श्वास बाहिर फाल्ने ।

- आसनको मुख्य स्थितिमा बिस्तारै गहिरो श्वास फेर्ने ।
- शुरुआतको स्थितिमा फर्कँदा श्वास लिने ।

**समयावधि-**

- अन्तिम अवस्थामा एकदेखि दुई मिनेटसम्म बस्ने ।
- अन्तिम मुद्रामा बस्न गाह्रो भएमा आसनलाई २-३ पटक दोहोर्‍याउने ।

**मनको एकाग्रता-**

- शारीरिकरूपमा ढाड, पेट र श्वासप्रश्वासमा ध्यान दिने ।
- आध्यात्मिकरूपमा मणिपुर चक्रमा ध्यान दिने ।
- यस आसनको सँगसँगै गर्ने अन्य आसनहरू मत्स्यासन, उष्ट्रासन र भुजङ्गासन आदि हुन् ।

**आसन गर्न नहुने अवस्थाहरू-**

- आँखा, मुटु र ढाडको समस्या भएको अवस्थामा ।
- सुत्केरी अवस्थामा ।
- अपरेसनपछिको केही अवधिभर यो आसन गर्नुहुँदैन ।

**फाइदाहरू -**

- यस आसन पेटको मालिसका लागि निकै फाइदाजनक छ । यसका अलावा यस यसको निरन्तर अभ्यासबाट पेटका विभिन्न समस्या जस्तै अपच र कब्जियत हटेर जान्छन् ।
- मेरुदण्डलाई सीधा बनाउँछ र मेरुदण्डबाट निस्कने नसाहरूलाई बलियो बनाउँदछ ।
- मणिपुर चक्र जागरणमा योगमुद्रासनको प्रयोग गरिन्छ ।❑



## भावपूर्ण श्रद्धाञ्जलि

जन्म
१९८२ ज्येष्ठ १६

स्वर्गारोहण
२०६६ कार्तिक १९

**स्व. नरनारायण जोशी**

यस आश्रमका कार्यकर्ता साधक श्री रुसबाबु जोशीज्यूका पूजनीय पिता नरनारायण जोशीको ८४ वर्षको उमेरमा असामयिक निधन भएको ४५ औं दिनको पुण्यतिथिमा दिवंगत आत्माको चिर शान्तिको कामना गर्दै यस दुःखद घडीमा शोक सन्तप्त परिवारजनप्रति हार्दिक समवेदना प्रकट गर्दछौँ ।

**सिद्धाश्रम शक्ति केन्द्र**
**सम्पर्क कार्यालय गोरखा बसपार्क**

## २०६६ माघ महिनामा पर्ने चाडपर्व

| मिति | चाडपर्व |
|---|---|
| माघ १ गते | माघे संक्रान्ति, मकरस्नान, सूर्यग्रहण |
| माघ ४ गते | **श्री शिव गोरक्ष हवन** |
| माघ ५ गते | **तान्त्रोक्त वटुक भैरव हवन,**<br>**तान्त्रोक्त गणपति हवन** |
| माघ ६ गते | **तान्त्रोक्त महालक्ष्मी हवन**,श्रीपञ्चमी,<br>**तान्त्रोक्त विन्ध्यवासिनी हवन,**<br>सरस्वती पूजा, रतिकाम पूजा |
| माघ ७ गते | **दिव्य गुरु महोत्सव,**<br>**तान्त्रोक्त बगलामुखी हवन,**<br>**तान्त्रोक्त महर्षि वेदव्यास हवन** |
| माघ ९ गते | अष्टमीव्रत, गोरखकाली पूजा |
| माघ १२ गते | भीमा एकादशीव्रत |
| माघ १३ गते | प्रदोषव्रत |
| माघ १६ गते | माघस्नान एवं स्वस्थानीव्रत समाप्त |
| माघ २३ गते | अष्टमीव्रत, गोरखकाली पूजा |
| माघ २६ गते | विजया एकादशीव्रत |
| माघ २८ गते | प्रदोषव्रत |
| माघ २९ गते | महाशिवरात्रि व्रत |

**प्रत्येक बृहस्पतिबार बिहान १०:०० बजे-गुरू पूजन**
**प्रत्येक दिन साँझ ५:०० बजे-आरती**

# शीतपित्त (उदर्द, कोठ, उत्कोठ) रोग (चाला, डाबर उठ्ने रोग)

छालामा एकाएक चालाहरू उठेर चिलाउने, जिउ सुन्निएर आउने रोगलाई शीतपित्त रोग भनिन्छ ।

चिसो हावाको सम्पर्कबाट कुपित भएका कफ र वायु कुपित पित्तसँग मिलेर शरीरको भित्र-बाहिर सबैतिर सर्छन् र शीतपित्त रोग उत्पन्न गर्छन् ।

**पूर्वरूप-** यो रोग लाग्दा शुरुमा बढी प्यास लाग्ने, अरुची हुने, वाकवाकी लाग्ने, शरीर गल्ने र भारी लाग्ने हुन्छ । आँखा राता हुन्छन् ।

**शीतपित्तको लक्षण-** यसमा अरिङ्गालले टोकेजस्तो शोथ छालामा हुन्छ । त्यसमा चिलाउने, सियोले घोचे झैं दुख्ने, ज्वर आउने र जिउ पोल्ने हुन्छ । वमन पनि हुन्छ । यसलाई उदर्द पनि भनिन्छ । फरक यो छ कि शीतपित्तमा वायुको प्रकोप बढी हुन्छ ।

**उदर्दको विशेष लक्षण-** यसमा छालामा रातो वर्णका गोल आकारका चिलाउने चालाहरू देखिन्छन् जुन बीचमा अलि भित्र गडेका हुन्छन् । यो रोग धेरैजसो शिशिर ऋतुमा हुन्छ । यो कफको प्रकोपबाट उत्पन्न हुन्छ ।

**कोठ र उत्कोठको लक्षण-** यो रोग वमन गराउने औषधि ठीक ढङ्गले प्रयोग नगर्नाले अथवा वमन हुन लाग्दा रोक्नाले उत्पन्न हुन्छ । यसमा पित्त र कफको प्रकोप कारण हुन्छ । यसमा रातो रङ्गका चिलाउने गोल मण्डलहरू (डाबरहरू) धेरै सङ्ख्यामा शरीरमा देखिन्छन् । कोठ चाँडै उत्पन्न हुन्छ र निको पनि हुन्छ । उत्कोठ एकपटक हराएपछि अर्को पटक पनि हुन सक्छ ।

**सामान्य चिकित्सा :** यसमा वमन र विरेचन गराउनुपर्दछ । वमनका लागि पर्वरको पात र नीम-पातको काढा खान दिनुपर्दछ । विरेचनका लागि त्रिफलाको काढामा पिप्ला र गुग्गुल मिसाएर सेवन गराउनुपर्दछ । तोरीको तेलले मालिस गरेर तातो पानीले नुहाउने गर्नुपर्दछ ।

त्रिफलाको चूर्ण महमा मिसाई खानाले अथवा अदुवाको रसमा पुरानो गुड राखेर खानाले अथवा गुडको साथमा ज्वानोको सेवन गर्नाले शीतपित्त रोगमा आराम हुन्छ । नवकार्षिक गुग्गुल पनि उपयोगी हुन्छ ।

२५ ग्राम गाईको घिउमा मरीचको चूर्ण १.५ ग्राम मिसाई बिहान नित्य खानाले शीतपित्तमा आराम मिल्छ ।

सूठो, मरीच र पिप्ला ५०-५० ग्राम लिएर चूर्ण बनाउने । उक्त चूर्णको बराबर (१५० ग्राम) मिश्रीको चूर्णमा मिसाएर राख्ने । यसलाई प्रतिदिन खाने गर्नुपर्दछ । अथवा १० ग्राम गुडसँग १० ग्राम अमलाको चूर्ण सेवन गर्ने । अथवा सूठो, मरीच, पिप्ला, यवक्षार र ज्वानु समभाग लिएर चूर्ण बनाउने र ३ ग्राम मात्रामा पानीसँग खाने गर्नुपर्दछ । शीतपित्तमा आराम हुन्छ ।

ज्वानु र गेरुलाई सिरका वा भिनेगरमा पिनेर लगाउने अथवा घिउमा सिँधेनून मिसाएर मालिस गर्ने गर्नाले डाबर उठेको हराएर जान्छ ।

हरिद्राखण्ड : हलेदोको चूर्ण ८० ग्राम, घिउ ६० ग्राम, गाईको दूध ४ लिटर, चिनी १.५ किलो सबैलाई मिसाएर पकाउने । पाकिसकेपछि उतारेर त्रिकटु, दालचिनी, तेजपात, सुकुमेल, वायुविडंग, निशोथ, त्रिफला, नागकेशर, नागरमोथा यी सबैको १०-१० ग्राम चूर्णका साथ लौहभस्म १० ग्राम पनि मिसाउने । यो औषधि ६-१२ ग्राम मात्रामा तातो दूध वा पानीसँग खान दिने । यसको सेवन गर्नाले शीतपित्त, उदर्द, कोठ, विचर्चिका आदि रोगहरू नष्ट हुन्छन् ।

**पथ्य कुराहरु :** यस रोगमा तीतो रस हुने वस्तुहरूको सेवन जस्तै काँचो हलेदो, नीमको पात खानु, तातो पानीले नुहाउनु र तातो कपडाले शरीर छोप्नु पथ्य हुन्छ ।

**अपथ्य कुराहरु :** वमनको वेग रोक्नु, पूर्व वा दक्षिणको हावाको सेवन गर्नु, दिउँसो सुत्नु, घाममा बस्नु, चिल्लो, अमिलो कुरा खानु, गरिष्ठ भोजन गर्नु यी सबै अपथ्य हुन्छन् । जय गुरुदेव !

## गोरख वाणी

**जप तप जोगी संजम सार ।**
**बाले कंद्रय कीया छार ॥**
**येहा जोगी जग मै जोय ।**
**दूजा पेट भरै सब कोय ॥**

# गो.नि.ज्यो.दि.वि.

परमपूज्य सद्‌गुरुदेवद्वय श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको आशीर्वादस्वरूप सिद्धाश्रम शक्ति केन्द्र, नेपालको व्यवस्थापनमा सञ्चालित गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमको स्थापना २०६२ वैशाख ५ गते भएको हो । परमपूज्य सद्‌गुरुदेवबाट प्राप्त आदेशानुसार समाजमा आध्यात्मिक शिक्षा लागू गर्नका लागि स्थापना भएको यस विद्याश्रमको प्रारम्भमा नर्सरीदेखि कक्षा एकसम्म सञ्चालन भएको थियो जसमा विद्यार्थी संख्या ७० रहेको थियो । स्थापनाको एक वर्ष नबित्दै विद्याश्रमको विकास क्रम बढ्न थाल्यो, फलस्वरूप दोस्रो वर्षमा विद्याश्रमले कक्षा एकदेखि पाँचसम्म सञ्चालन गर्ने अनुमति प्राप्त गऱ्यो जसमा कुल विद्यार्थी संख्या २ सय ४२ जना थियो भने आवासीय विद्यार्थी संख्या ५५ थियो । तेस्रो वर्षमा फेरि प्रगतिको मार्गमा अगाडि बढ्दै विद्याश्रमले कक्षा सातसम्म पढाउने अवसर प्राप्त गऱ्यो जसअन्तर्गत आवासीय विद्यार्थी संख्या बढेर ८० पुगेको थियो । विद्याश्रमले चौथो वर्षमा कक्षा आठसम्म पठनपाठन सञ्चालन गरेर प्रथमपटक जिल्लास्तरीय कक्षा सञ्चालन गर्न सफल भयो । हाल पाँचौं वर्षको अन्तरालमा विद्याश्रमले कक्षा नौसम्म पठनपाठन कार्य गरिरहेको छ जसअन्तर्गत आवासीय विद्यार्थीको संख्या बढेर १२१ रहेको छ भने कुल विद्यार्थी संख्या लगभग ३७० रहेको छ । सद्‌गुरुदेवहरूको आशीर्वादस्वरूप, लगनशील कर्मचारी तथा आश्रमका साधक साधिकाहरूको उचित सहयोगको कारणले गर्दा विद्याश्रम आज यसरी प्रगतिको मार्गमा अगाडि बढ्न सफल भएको छ । दुई गुरुलाई दुई आँखाको रूपमा र आधुनिक (Mordern) शिक्षालाई दाहिने हत्केला तथा आध्यात्मिक (Spiritual) शिक्षालाई देब्रे हत्केलाको रूपमा मानेर विद्याश्रम अगाडि बढिरहेको छ ।

विद्याश्रममा हाल सञ्चालन भइरहेको पठनपाठनको विधिलाई दुई फरक तरीकाले आँकलन गर्न सकिन्छ । एकातिर एक्काइसौं शताब्दीको स्कुलको रूपमा विद्याश्रममा अरू सम्पन्न स्कुलका जस्तै हरेक विषयवस्तुको जानकारी दिइन्छ भने विशेषरूपमा हरेक विषयलाई व्यावहारिक (Practical) रूपमा प्रमाणित गरेर पढाइन्छ भने स-साना विद्यार्थीलाई भनेर मोन्टेशरी प्रणालीअन्तर्गत पढाइने व्यवस्था गरिएको छ । विद्याश्रमको थप विषयवस्तुको रूपमा आध्यात्मिक शिक्षाको रूपमा व्यावहारिक ज्ञानका कुराहरू सिकाइन्छन् । साथै योग, ध्यान, पूजापाठ तथा अन्य आध्यात्मिक क्रियाकलापमा विद्यार्थीलाई समावेश गराइन्छ जसको कारणले गर्दा विद्यार्थीमा धेरै राम्रो परिवर्तन भएको सजिलै देख्न सकिन्छ । शायद यसैले गर्दा हाल विद्याश्रममा आफ्ना नानीहरूलाई अध्ययन गराउनका लागि अभिभावकहरूले निरन्तर प्रयास गरिरहेको परिवेश छ ।

## अन्तरविद्यालय फुटबल प्रतियोगितामा प्रथम

गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमले किराँतेश्वर क्रियटिभ क्लबले आयोजना गरेको अन्तरविद्यालय फुटबल प्रतियोगिता (१३ वर्षमुनिका) मा प्रथम स्थान हासिल गरेको छ । काठमाडौंको बसुन्धरामा गत पौष २ गतेदेखि नौवटा विद्यालयबीच भएको उक्त प्रतिस्पर्धामा पहिलो खेल प्रदर्शनबाट नै दर्शकहरूको मन जित्न सफल विद्याश्रमका खेलाडीहरूले शारीरिकरूपमा साने भए पनि कुनै पनि खेलमा हारको सामना गर्नु परेन । नौमध्ये पाँच विद्यालयसँग प्रतिस्पर्धा गरेको विद्याश्रमले सेमीफाइनलमा पृथ्वी बोर्डिङ्ग स्कुलसँग तथा फाइनलमा टिलिङ्गाटार स्कुलसँग प्रतिस्पर्धा गरेको थियो । फाइनल खेलको समापनपछि क्लबका पुकार राणाको अध्यक्षतामा सम्पन्न पुरस्कार वितरण कार्यक्रममा विभिन्न विधाअन्तर्गत सबैभन्दा बढी पुरस्कार विद्याश्रमले प्राप्त गरेको थियो । नेपाल निमुखा बालबालिका उत्थान संस्थानका बालबालिकाहरूको सहयोगार्थ उक्त प्रतियोगिता आयोजना गरिएको थियो ।

# सिद्धाश्रम शक्ति केन्द्र
# सम्पर्क कार्यालय बाह्रबिसे, सिन्धुपाल्चोक

काठमाडौँबाट ८७ कि.मी. टाढा सिन्धुपाल्चोक जिल्ला विभिन्न धार्मिक एवं पर्यटकीय स्थलको रूपमा प्रसिद्ध छ। यस जिल्लामा तातोपानी, भैरव कुण्ड, पाँचपोखरी, कालिञ्चोक, जननी माता क्षमादेवी, उग्रचण्डी लिस्ति माता, त्रिपुरासुन्दरी माता, रक्तकाली माता, लट्टेश्वर महादेव, कपेश्वर महादेव, टुन्टुन महादेव, गौरती भीमेश्वर, सिद्धिकाली माता आदि प्रसिद्ध धार्मिक एवं पर्यटकीय स्थलहरू रहेका छन् ।

परमपूज्य सद्गुरुदेवहरूको असीम कृपास्वरूप यस सिन्धुपाल्चोक जिल्लामा सिद्धाश्रम शक्ति केन्द्ररूपी बीज रोप्ने कार्य वि.सं.२०६३ माघ १५ गते आरती संचालन केन्द्रको रूपमा यसै जिल्लाको बाह्रबिसेमा भएको थियो । तत्पश्चात् यसको विकास विस्तार हुँदै २०६४ कार्तिक १९ गतेबाट यो सम्पर्क कार्यालयमा रूपान्तरण भयो। हाल यस सम्पर्क कार्यालयअन्तर्गत सुकुटेमा आरती संचालन केन्द्र, कोठेमा प्रचारप्रसार कक्ष, जिल्ला सदरमुकाम चौतारामा आरती संचालन केन्द्र स्थापना भइसकेका छन् भने निकट भविष्यमा अन्य स्थानहरूमा प्रचारप्रसार कक्षहरू स्थापना हुने तयारी भइरहेको छ ।

यस आश्रमबाट विभिन्न आध्यात्मिक गतिविधिहरू सञ्चालन हुँदै आइरहेका छन् । आश्रम नियमितरूपमा दिउँसो ३:०० बजे खुल्दछ भने नित्य साँझ ५:०० बजे गुरु आरती सम्पन्न हुने गर्दछ । प्रत्येक बिहीबार बिहान १० बजे गुरु पूजन, प्रत्येक अंग्रेजी महिनाको २१ तारीखमा दिव्य गुरु महोत्सव सम्पन्न हुँदै आइरहेका छन् भने गुरु पूर्णिमा महोत्सव, सद्गुरुदेव अवतरण दिवस (अप्रिल २१), महाप्रयाण दिवस (जुलाई ३), पूजनीय गुरुमाताको जन्म दिवस (अप्रिल ८) तथा विभिन्न पर्वहरूमा पूजन, हवन, मन्त्रजप, भजन-कीर्तनलगायत विशेष कार्यक्रम सम्पन्न हुँदै आइरहेका छन् । गोरक्ष प्रकट दिवस (वैशाखी पूर्णिमा) मा गोरखाको गोरख गुफामा प्रत्येक वर्ष सिद्धाश्रम शक्ति केन्द्र नेपालले आयोजना गर्दै आइरहेको रोट महोत्सवहरूमा यस सम्पर्क कार्यालयको तर्फबाट उल्लेख्यरूपमा साधक-साधिका भक्तजनहरूले सहभागिता जनाउँदै आइरहनुभएको छ । यसैगरी आश्रमका अन्य गतिविधिहरूमा सिद्धाश्रम शक्ति केन्द्र नेपालद्वारा प्रकाशित आध्यात्मिक शक्ति अनुसन्धानमूलक मासिक पत्रिका गोरक्ष निखिल वाणीको वार्षिक सदस्यहरू विस्तार गर्ने, संस्थागत कार्यक्रमहरूमा आश्रमको गतिविधिको बारेमा जानकारी गराउने, विभिन्न चाडपर्व एवं अवसरहरूमा स्थानीय बजारलगायत अन्य क्षेत्रमा भजन-कीर्तन, देउसी-भैलो आदि कार्यक्रमहरू सम्पन्न गर्दै आइरहेका छन्। यसै गरी यस सम्पर्क कार्यालयबाट समय समयमा विभिन्न मठ-मन्दिरहरूमा सरसफाइका कार्यक्रमहरू पनि सम्पन्न हुँदै आइरहेका छन् ।

'तान्त्रिक साधना तान्त्रिक ध्यान, मानव जीवनको वास्तविक ज्ञान'जस्ता नारालाई आत्मसात् गर्दै यस सम्पर्क कार्यालयमा २०६५ माघ १५ गते दोस्रो वार्षिकोत्सवबाट पहिलो चरणको ध्यानको कक्षा पनि सञ्चालन भई सफलतापूर्वक सम्पन्न भयो ।

संस्थाले अज्ञात नाथ पन्थको कार्यशैलीमा प्रवेश पाइसकेपछि यस सम्पर्क कार्यालयका लागि हालसालै २०६६ मंसिर १२ गतेबाट ७ जना गुरुसेवा दलका सदस्यहरूको हाजिना समूह गठन भएको छ। सद्गुरुदेवहरूको आशीर्वाद तथा सद्गुरुदेवहरूप्रतिको कार्यकर्ताहरूको भक्तिभाव, संस्था र गुरुकार्यप्रतिको लगावको कारणले आगामी दिनमा आध्यात्मिक युग निर्माणको महान् योजनामा यस सम्पर्क कार्यालयले महत्त्वपूर्ण योगदान पुऱ्याउने निश्चित छ ।

आगामी माघ १५ गते यस सम्पर्क कार्यालयको तेस्रो वार्षिकोत्सव कार्यक्रम विशेषरूपमा सम्पन्न हुने भएकोले सम्पूर्ण महानुभावहरूलाई उक्त कार्यक्रममा हार्दिक आमन्त्रण गर्दछौं । जय गुरुदेव !

## हवन कार्यक्रम

सिद्धाश्रम शक्ति केन्द्रका मासिक कार्यक्रम अन्तर्गत हरेक महिनाको पहिलो हप्ता सञ्चालन हुँदै आइरहेका हवन कार्यक्रमहरू गत पौष महिनामा निम्नानुसार सम्पन्न भयो– पौष ६ गते सोमबार पशुपति मृगस्थलीस्थित गुरु गोरखनाथको मन्दिर प्रांगणमा श्री शिव गोरक्ष हवन, पौष ७ गते मंगलबार लगनखेलस्थित वटुक भैरव मन्दिर प्रांगणमा तान्त्रोक्त वटुक भैरव हवन, पौष १ गते बुधबार लखनखेलस्थित माता महालक्ष्मीको मन्दिर प्रांगणमा तान्त्रोक्त महालक्ष्मी हवन, पौष २ गते बिहीबार कुम्भेश्वर पाटनस्थित माता बगलामुखी मन्दिर प्रांगणमा तान्त्रोक्त बगलामुखी हवन सम्पन्न भयो । उपरोक्त हवन कार्यक्रमहरूमध्ये तान्त्रोक्त वटुक भैरव हवन बिहान ७:०० बजेदेखि सञ्चालन भएको थियो भने बाँकी हवन कार्यक्रमहरू बिहान ८:०० बजेबाट सञ्चालन भएका थिए ।

यस्तै मासिक हवनकै शृङ्खलामा गत पौष १ गते बुधबार पोखराको विन्ध्यवासिनी मन्दिर प्रांगणमा तान्त्रोक्त विन्ध्यवासिनी हवन कार्यक्रम सम्पन्न भयो । पौष २ गते बिहीबार तनहुँको दमौलीस्थित वेदव्यास गुफा परिसरमा तान्त्रोक्त महर्षि वेदव्यास हवन कार्यक्रम सम्पन्न भयो । पौष ७ गते मंगलबार भक्तपुरको सूर्यविनायक मन्दिर प्रांगणमा तान्त्रोक्त गणपति हवन सम्पन्न भयो भने उक्त दिनमा नै काभ्रेको चण्डेश्वरी मन्दिरमा तान्त्रोक्त चण्डेश्वरी हवन भयो ।

## दिव्य गुरु महोत्सव

गत पौष ६ गते काठमाडौंको बसुन्धरास्थित गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रममा विभिन्न कार्यक्रमसहित दिव्य गुरु महोत्सव सम्पन्न भयो । परमपूज्य सद्‌गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज डा. नारायण दत्त श्रीमालीको रूपमा यस धरतीमा पदार्पण हुनुभएको ऐतिहासिक क्षणको स्मरणस्वरूप सिद्धाश्रम शक्ति केन्द्रले अंग्रेजी महिनाको प्रत्येक २१ तारीखलाई दिव्य गुरु महोत्सवको रूपमा मनाउँदै आइरहेको छ ।

स्तवन वन्दनासँगै १०:१५ मा शुरु भएको दिव्य गुरु महोत्सवमा गुरु पादुकाको दिव्य पूजन, मन्त्र जप, हवन, आरती, भजन-कीर्तन र नृत्यादि कार्यक्रमहरू सम्पन्न भएका थिए । महोत्सवमा पूजन गर्ने सौभाग्य महेश आचार्य र सविन आचार्यले प्राप्त गर्नुभएको थियो ।

कार्यक्रमको दोस्रो चरण गुरुसेवा दलका सदस्य मधुमति रंजितको स्वागत-मन्तव्यबाट शुरु भएको थियो । दोस्रो चरणमा सिद्धाश्रम शक्ति केन्द्रको गुरु सेवा दलमा पदासीन हुनुभएकाहरूलाई हरियो पोशाक वितरण गरिएको थियो । रातो टिका लगाइदिँदै उक्त पोशाक सावर पन्थी सदस्य १ ज्यूले वितरण गर्नुभएको थियो ।

कार्यक्रममा स्ववचनको क्रममा सावर पन्थी सदस्य १ ज्यूले गुरुको वास्तविक स्वरूपबारे अवगत गराउनुभएको थियो । 'यदि हामीमा ज्ञान छ भने पलपलमा हामीमा गुरु हुनुहुन्छ'– उहाँले उक्त अवसरमा बताउनुभयो ।

कार्यक्रममा उहाँले विशेष ध्यानको प्रशिक्षण पनि गराउनुभएको थियो । स्मरणीय छ, सिद्धाश्रम शक्ति केन्द्रले दिव्य गुरु महोत्सवको पावन अवसरमा उपस्थितहरूका लागि विशेष ध्यान प्रदान गर्दै आइरहेको छ ।

कार्यक्रममा हालै सम्पर्क कार्यालयमा रूपान्तरण हुने सौभाग्य पाएको तीनकुने सम्पर्क कार्यालय र गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमले नृत्य प्रस्तुत गरेका थिए ।

## आश्रम भवन शिलन्यास

सिद्धाश्रम शक्ति केन्द्रमा अ.ना.प. कार्यशैली भित्रिएपछि नवीन ढंगबाट सांगठनिक स्वरूपहरूमा फेरबदल हुँदै आइरहेका छन् । यसै क्रममा कास्की जिल्लामा तीनवटा सम्पर्क कार्यालयहरू स्थापित भएपछि खडा भएको क्षेत्रीय कार्यालयको लागि भवन निर्माणको लागि कटिबद्ध भएर लागिपरेका त्यहाँका कार्यकर्ताहरूको सत्प्रयासले सार्थकता पाएको छ । उबडखाबड जमीनमा पनि डोजर लगाएर सम्याउँदै क्षेत्रीय भवनको शिलान्यास हालसालै भएपश्चात् भवन निर्माणको प्रक्रियाले समेत गति पाएको छ र चाँडै नै निर्माण सम्पन्न हुने आशा पनि लिन सकिन्छ ।

## प्र.स.का. विशालनगरद्वारा रक्तदान कार्यक्रम आयोजना

सिद्धाश्रम शक्ति केन्द्र प्रस्तावित सम्पर्क कार्यालय विशालनगर र मनमानेश्वरी युवा क्लब, टंगालको आयोजनामा गत पौष १८ गते रक्तदान कार्यक्रम सम्पन्न भयो । मनमानेश्वरी मन्दिर प्रांगणमा सम्पन्न उक्त कार्यक्रममा छपन्न जना रक्तदाताहरूले आफ्नो रगत दान गरेका थिए । कार्यक्रम बिहान ११ बजे शुभारम्भ भएको थियो ।

## का.स.स. ग र आधारभूत तालिम

सि.श.के. को आयोजनामा मासिक तालिम कार्यक्रम अन्तरगत काठमाडौँको कमलपोखरीस्थित अग्रवाल भवनमा बिहान ६:३० बजेदेखि ११:०० बजेसम्म का.स.स. ग को आठौँ र बिहान ११:३० बजेदेखि साँझ ५:३० बजेसम्म सत्रौं आधारभूत तालिम कार्यक्रम सम्पन्न भयो ।

नेपालका विभिन्न स्थानबाट का.स.स. ग मा ३५१ जना र आधारभूत तालिमका लागि करिब ४८१ जना छनौट हुनुभएको उक्त तालिममा पूजन, भजनकीर्तन, नृत्य आदिका साथै प्रवचन प्रशिक्षण र विशेष ध्यान कार्यक्रमक पनि सम्पन्न भयो । सो क्रममा का.स.स. ग को पहिलो दिन पूजन गर्ने सौभाग्य साधिकाहरू लक्ष्मी कुँवर, जानकी के.सी., प्रतिभा शर्मा, गीता श्रेष्ठ र दोस्रो दिन नानुमाया आचार्य, लक्ष्मी जि.सी, योगमाया कार्की, रामचन्द्र न्यौपाने र कमल प्रसाद पराजुलीले प्राप्त गर्नुभएको थियो भने आधारभूत तालिममा पूजन गर्ने सौभाग्य प्राप्त गर्नेमा पहिलो दिन ज्ञानुका सुनुवार, नानिचा श्रेष्ठ, शुशिला राना, कमला थापा र दोस्रो दिन चन्द्रकला ओभा, शान्ति लामिछाने, मीना खड्का, सजिना श्रेष्ठ, गोमा पण्डित हुनुहुन्थ्यो ।

प्रशिक्षणका विषयवस्तहरूमा अ.ना.प कार्यशैलीबारे संस्थागत अन्तरक्रिया, संस्थागत जानकारी, प्रशासन र नीति नियमबारे, सगंठनबारे, एफ.एम. कार्यक्रमसम्बन्धी, संस्थागत अनुशासनसम्बन्धी, गो.नि.वा पत्रिका, संकल्प र आध्यात्मिक प्रशिक्षणका साथै दुवै तालिममा फरक प्रकारको विशेष ध्यान सम्पन्न भएको थियो । सोही अवसरमा सा.प. १, सा.प. २, र सा.मा. ४ ज्यूको विशेष उपस्थिति र प्रशिक्षण साथै सा.प. ३ ज्यूको मर्मस्पर्शी शुभकामना सन्देश पनि श्रव्यदृश्य रेकर्डमार्फत् सुनाइएको थियो जसबाट सबै कार्यकर्ताहरूलाई विचलित नभई गुरूप्रेम रसका साथ गुरुकार्य गर्न प्रेरणा मिलेको थियो ।

तालिमका लागि छनौट हुनुभएका गुरुसेवक सेविकाहरूमध्ये ग मा २८८ जना र आधारभूत तालिममा ३८० जनाभन्दा बढीको उपस्थिति रहेको उक्त कार्यक्रममा अतिरिक्त क्रियाकलापअन्तर्गत उपत्यका बाहिरका जिल्लाबाट आउने कार्यकर्ताहरूका लागि विभिन्न स्थानीय दिव्य मन्दिर, देवीदेवताको स्थान आदि भ्रमण, भिडियो प्रदर्शन आदिको व्यवस्था पनि गरिएको थियो ।

हालसम्मकै सबैभन्दा बढी संख्या रहेको यस तालिम कार्यक्रम ऐतिहासिकरूपमा सम्पन्न भएको थियो ।

## सौरपानी आश्रम भवन समुद्घाटन

सिद्धाश्रम शक्ति केन्द्र सम्पर्क कार्यालय सौरपानीले वार्षिकोत्सव तथा गोरखा, सौरपानीस्थित नवनिर्मित भवनको समुद्घाटन कार्यक्रम हालै सम्पन्न गऱ्यो । गत पौष १० देखि १२ गतेसम्म त्रिदिवसीयरूपमा सम्पन्न उक्त कार्यक्रममा नवनिर्मित भवनको समुद्घाटन सावर पन्थी सदस्य १ र २ ज्यूले संयुक्तरूपमा गर्नुभएको थियो भने उक्त कार्यक्रममा सम्पर्क कार्यालय सौरपानीबाट प्रकाशित स्मारिकाको पनि विमोचन गरिएको थियो । उक्त अवसरमा स्थानीय लब्धप्रतिष्ठित व्यक्तित्वहरूका अतिरिक्त स्कुल तथा क्याम्पसका प्रिन्सिपलहरूले मन्तव्य व्यक्त गर्नुभएको थियो । कार्यक्रममा नृत्य प्रतियोगितामा विजयी विद्यार्थीहरूलाई पुरस्कार पनि वितरण गरिएको थियो ।

मन्तव्य दिने क्रममा भवन निर्माण समितिका अध्यक्ष ठाकुर ढकालज्यूले भवन निर्माणको क्रममा भोगेका तीतामीठा कुरालाई प्रस्तुत गर्नुभयो भने लेखा प्रतिवेदन हाजिना समूहका मासानजी रमेश कोइरालाले पेश गर्नुभएको थियो । हाजिनाजी अनु श्रेष्ठले वार्षिक प्रतिवेदन पेश गर्नुभएको उक्त त्रिदिवसीय कार्यक्रममा गुरुसेवा दलका भरत पाण्डेले स्वागत मन्तव्य दिनुभएको थियो ।

कार्यक्रममा मन्त्रजप तथा साधना कार्यक्रम हात्तीसुँडे डाँडा परिसरमा सावर पन्थी १ र २ ज्यूले सम्पन्न गराउनुभएको थियो । सम्पर्क कार्यालयमा साँझ अन्तर्क्रिया कार्यक्रम पनि सम्पन्न भएको थियो । उक्त कार्यक्रममा भाग लिन अधिराज्यभरिका सम्पर्क कार्यालयहरूबाट कार्यकर्ताहरूको ओइरो लागेको थियो भने सौरपानी क्षेत्रका कोइराला गाउँ, नेवार गाउँ, मुचुकटार, मसेल, देउराली , अर्चले, घुनचोकटार, भच्छेक, ताकु, स्वाँरा, ताप्लेछाप आदि आरती संचालन केन्द्र र प्रचारप्रसार कक्षबाट पनि कार्यकर्ताहरूको सहभागिता रहेको थियो ।

समुद्घाटन कार्यक्रमको आकर्षण रहेको थियो– नि:शुल्क स्वास्थ्य सेवा । कार्यक्रममा UIHRDF का स्टाफहरूबाट तीनसयभन्दा बढी विरामीहरूको उपचार गरिएको थियो ।

गुरुधामका रूपमा परिचित हात्तीसुँडे डाँडाको 'गोरख निखिल मन्दिर' साधक साधिकाहरूका लागि अपूर्व पीठको रूपमा परिचित रहिआएको छ । आगामी दिनमा पनि यस धाममा आध्यात्मिक कार्यक्रमहरू संचालन गरिने जानकारी समेत कार्यक्रममा गराइएको थियो ।

गोनि जागरण युवा क्लबका सदस्यहरूलाई सावर पन्थी सदस्यज्यूहरूले संस्थाको लोगो अंकित टिशर्ट उपहार दिनुभएको थियो ।

स्मरणीय छ, सिद्धाश्रम शक्ति केन्द्रले त्रिदिवसीयरूपमा आश्रम भवन समुद्घाटन कार्यक्रम सम्पन्न गरेको यो दोस्रो अवसर हो । संस्थाले पहिलो समुद्घाटन कार्यक्रम सम्पर्क कार्यालय रामघाट, पोखराको गरेको थियो ।

# जाँदा जाँदै

हामीहरु देख्छौं धेरै मानिसहरुको समय अर्काको बारेमा सोचेर बितिरहन्छ । यो मान्छे यस्तो, त्यो मान्छे त्यस्तो, यसले यो ठीक गर्‍यो, त्यो बेठीक भन्दाभन्दै मानिसको जीवनको अधिकांश समय बितेको हुन्छ । जबकि आफ्नो जीवनको महत्त्वपूर्ण समय त मानिसले आफू स्वयंको मूल्याङ्कन गरेर, आफ्ना कमी-कमजोरीहरुलाई हटाएर आफूलाई एउटा अद्वितीय मानव बनाउनमा व्यतीत गर्नुपर्ने थियो । दुःखदायी कुरा त अझ यो हुन्छ कि समाजमा सामान्य जीवनयापन गरिरहेका मानिसहरु मात्र नभएर अध्यात्मसँग जोडिएर आफ्नो जीवनलाई ऊर्ध्वमुखी बनाउन अग्रसर मानिसहरुमा पनि यो प्रवृत्ति देखिन्छ । अध्यात्मको लक्ष्य नै आफ्ना जन्म-जन्मका पाप, दोषहरुलाई हटाएर आफ्नो आत्माको उज्ज्वल स्वरुपलाई प्राप्त गर्दै परमात्मामा लीन हुनु हो । जबसम्म मानिसहरुको जन्म-जन्मका पाप, दोषहरुलाई पखालिन्न, उच्चता प्राप्ति असम्भव छ । तर जन्म-जन्मका पाप, दोषहरुलाई हटाउन अध्यात्ममा जोडिएको मानिस आफ्नो यस उद्देश्यलाई बिर्सेर अझ पाप, दोषको भारी बढाइरहेको हुन्छ ।

अधिकांश मानिसहरु भन्दछन् कि उनीहरु सही छन्, सत्य छन् तर अर्को व्यक्ति गलत छ, झूट छ । उनीहरुको परमात्मासँगको सम्बन्ध भावभक्तियुक्त छ, तर अर्काको त्यो सम्बन्ध एउटा ढोंग मात्र हो । यो सबै देखेर परमात्मालाई कति हाँसो उठ्छ होला ? किनकि कुनै अर्को व्यक्तिको परमात्मासँगको सम्बन्धलाई, उसको सत्यता, असत्यतालाई न त कसैले बाहिरबाट हेरेर मूल्याङ्कन गर्न सक्दछ, न त यस्तो मूल्याङ्कन गर्ने अधिकार नै उसलाई छ ।

हुन सक्छ जो व्यक्तिलाई हामी गलत देख्दछौं, ऊ परमात्माको प्रिय हुन सक्छ र जो व्यक्तिलाई हामी भक्त देख्दछौं उसको वास्तविकता त्यस्तो नहुन सक्छ । त्यसैले यस्ता कुराहरु सोचेर, अर्काको अनावश्यक टीकाटिप्पणी गरेर हामीले आफ्नो समय किन खर्चिने ? हामी आफूलाई सही साबित गर्न अर्कालाई प्रायः गलत साबित गर्ने कोशिश गरिरहेका हुन्छौं । हाम्रो यस्तो कोशिशबाट केही व्यक्तिहरुको अगाडि हामी आफूलाई सही साबित गर्न सकौंला तर ती परमात्मा, जो सर्वव्यापी छन्, तिनका अगाडि हामी कस्तो बनौंला ?

मानिसको जीवन महत्त्वपूर्ण छ, जीवनको प्रत्येक पल महत्त्वपूर्ण छ । हाम्रा कति जन्म यसै बिते, यो जीवन पनि बित्न लागिसकेको छ । त्यसैले जीवनको एक पल पनि खेर नफाली गल्ती, झूटबाट आफूलाई जोगाएर निरन्तर परमात्मा प्राप्तितिर गतिशील हुन हामी सबैको लागि अत्यावश्यक छ । परमात्माको दृष्टिमा आफू स्वयं सही हुन आवश्यक छ, बाँकी अर्काको जिम्मा हामीले किन लिने ? परमात्माको दृष्टिमा केही कुरा हुँदैन । कसैले राम्रो काम गरेको छ भने उसले अवश्य नै पुरस्कार पाउँछ, नराम्रो काम गरेको छ भने अवश्य नै सजायँ पाउँछ । यो व्यवस्था त परमात्माको हो, यो मूल्याङ्कन गर्ने दायित्व त परमात्माको नै हो । हाम्रो दायित्व हो– केवल आफूलाई सच्याउनु र आफूलाई आन्तरिकरुपमा राम्रो बनाउनु ।

हामी यस मूलभूत सत्यलाई अङ्गीकार गरेर अघि बढ्यौं भने हाम्रो जीवन अवश्य नै सुख र आनन्दले पुलकित हुनेछ । त्यस्तो अवस्थामा न त हामी कहिल्यै दुःखी हुन्छौं, न त आफ्नो कारण अरुलाई दुःखी बनाउँछौं । हामी आज दुःखी यसैकारण छौं कि हामीमा अर्काको चियोचासो गर्ने, अरुसँग आफूलाई तुलना गर्ने र आफूलाई राम्रो बनाउन अरुलाई नराम्रो बनाउने प्रवृत्ति अत्यधिक मात्रामा छ ।

त्यसैले धेरै समय खेर गइसक्यो, अबको बाँकी समयलाई खेर नफालौं । आफ्ना कमी-कमजोरीहरुलाई नियालौं, तिनलाई सच्याउने कोशिश गरौं । अर्काको टिप्पणी गर्न छाडौं, आफू स्वयंलाई हर समय सत्यतामा आधारित बनाऔं ।

हामीले यस्तो गर्‍यौं भने अवश्य नै हाम्रो जीवन स्वर्णिम हुनेछ । आगामी आइरहेको गोरख निखिल युगले त्यस्ता सच्चा व्यक्तिहरुको नै खोजी गरिरहेको छ । जय गुरुदेव !